## थोरै कुरा

कात्यायन ऋषिले लेखेका ग्रन्थहरू मध्येको यो एक लघु ग्रन्थ हो । शुक्ल यजुर्वेद अन्तर्गतका संस्कार आदि गर्नुपर्दा पारस्कर गृह्यसूत्र, कात्यायन श्रौत सूत्र, कात्यायन स्मृति आदिलाई प्राथमिकता दिनु भनिएको छ । यिनमा भएभन्दा विपरीतका काम नगर्नू तर नबाझिने अन्य ग्रन्थका कुरा गर्दा हुन्छ भनिएको छ ।

व्याख्या गर्दा ग्रन्थ लामो हुने हुनाले यसलाई सकेसम्म छोटो बनाएको छु । कतै कतै केही नोट मार्फत केही कुरा प्रष्ट पारिएको छ । कतै नजानेर, कतै नियतवश त कतै विशेष कारणले स्पष्ट अर्थ दिइएका छैनन् ।

भूमिका लम्ब्याउन जान्दिन । पढेपछि पाउने सुझाबहरु मेरा लागि अति उपयोगी हुने छन् । सबै विषयवस्तु सबैका लागि उपयोगी छैनन् । धेरै गन्थन गर्ने औकात मसँग छैन । तर यसले ज्ञान लिन चाहनेहरुलाई जग बसाल्न मद्दत गर्दछ भनी ठान्दछु ।

वि.सं. २०७८।११।२१, नेपाल

| | | |
|---|---|---|
| | होम कसरी र कति हाल्ने ? | |
| | होमको आगो फुक्ने विधि | |
| दशौं | बिहानका नित्य कर्म | |
| | नदीमा नुहाउन निषेध गरिएको अवस्था | |
| | नदीको परिभाषा | |
| | नदीमा नुहाउन हुने अवस्था | |
| | दानमा प्रयोग हुने अशुद्ध अन्न कसले खान्छ ? | |
| | ग्रहणमा जलको शुद्धता | |
| एघारौं | सन्ध्याको महत्व र ब्राह्मण | |
| | कुश र बर्हिको परिभाषा तथ आचमनमा प्रयोग | |
| | पवित्र र उपग्रह | |
| | मार्जन मन्त्र | |
| | महाव्याहृति र शिरमन्त्र | |
| | अघमर्षण | |
| | सूर्यलाई जलदान र प्रार्थना | |
| | सन्ध्यावन्दनको समय | |
| बाह्रौं | तर्पण विधि | |
| तेह्रौं | पञ्चयज्ञ विधि | |
| चौधौं | नित्य बलि विधि | |
| | ब्रह्मयज्ञ | |
| पन्ध्रौं | दक्षिणा र पूर्णपात्र | |
| | दान दिने पात्र (व्यक्ति) चयन | |
| | आज्यस्थाली | |
| | चरुस्थाली | |
| | चरु | |
| | मेक्षण | |
| | दर्वी | |
| | मुसल, ओखल र नाङ्लो | |
| | काम गर्दा हात राख्ने तरिका | |
| | अग्निकण जम्मा पार्ने काम | |
| | परिधी | |
| | होम गर्ने अन्न आदि | |
| सोह्रौं | श्राद्धमा तिथि र समय निर्णय | |
| | श्राद्ध गर्ने अधिकार | |
| | सपिण्डीकरण | |
| | वार्षिक श्राद्ध बाहेकका श्राद्धमा स्त्रीलाई पिण्डदान दिने विधि | |
| | पुत्रिका पुत्र र पिण्डदान | |
| सत्रौं | श्राद्ध विधि : श्राद्धको कर्षू | |
| | शङ्कु | |
| | कर्षूमा कुश स्थापन | |
| | सौवीराञ्जन | |
| | श्राद्धमा हतार नगर्नू | |
| | तर्पण | |
| | तर्पण दिने भाँडा | |
| | आसुर भाँडा | |

| | | |
|---|---|---|
| | श्राद्धमा फूल, धूप र होम | |
| | कर्ममा बायाँ हातको प्रयोग | |
| | कर्षू | |
| | पिण्डदान | |
| | अष्टमी-होम | |
| | अन्वाष्टक श्राद्ध | |
| अठारौं | एउटै कर्मको परिभाषा | |
| | आदि होम | |
| | बलिवैश्वदेव | |
| | छुटेको होम | |
| | अशक्त र होम | |
| | प्रायश्चित होम | |
| | होम र वैवाहिक-अग्नि | |
| | प्रायश्चित होम | |
| | पिण्डदिने अधिकार | |
| | आशिर्वचन र रजस्वला भएकी पत्नी | |
| | यज्ञमा विभिन्न कुराको परिमाण | |
| उन्नाईसौं | अग्निकर्म र पत्नी | |
| | उत्तम पत्नी | |
| | बिहानको साइत | |
| | दुष्टा र असल स्त्री | |
| | बहुविवाह र होम | |
| | होमको अग्नि | |
| | विवाहको होम | |
| बिसौं | वैवाहिक अग्निको प्रयोग र अग्निहोत्रीको दाहसंस्कार | |
| एक्काईसौं | अग्निहोत्री :अन्तिम समयमा अशक्त हुँदाको होम | |
| | अन्तिम समयमा सफा कपडा लगाइ दिनू र ठाउँ सार्नू | |
| | प्राण गएपछिका कर्तव्य | |
| | मलाम | |
| | घाटका कर्म | |
| | दागबत्ती | |
| बाइसौं | मलामी, जलदान र स्नान | |
| | मलामीको कर्तव्य | |
| तेइसौं | विदेशमा बितेका अग्निहोत्रीको दाहसंस्कार र जुठो | |
| | महापापी अग्निहोत्री र अन्तिम संस्कार | |
| | अग्निहोत्रीको मर्यादामा बसेकी स्त्रीको दाहसंस्कार | |
| | अस्थिसञ्चयन र विसर्जन | |
| चौबिसौं | सूतकमा त्यागिने कर्म र सोह्र श्राद्ध | |
| | श्राद्धको अधिकार | |
| | सपिण्डीकरण आदि | |
| पच्चिसौं | विविध शब्द आदि, ब्रह्मचर्य धर्म र न्वागी होम | |
| छब्बिसौं | न्वागी आदि होम | |
| सत्ताइसौं | अन्वाहार्य श्राद्ध | |
| | परिसमूहन | |
| | होमका अन्न | |

| | | |
|---|---|---|
| | मन्त्र उच्चारण पछिका कर्म विशेष | |
| | यज्ञ पछिका केही नियम | |
| | सन्ध्याकालीन होम | |
| | प्रायश्चित होमका लाभ | |
| | होम गर्न छुटेको प्रायश्चित | |
| | केही शब्दार्थ | |
| | व्रतबन्धमा वटुकले प्रयोग गर्ने लौरो | |
| | गोदान | |
| | वेदाध्ययन | |
| | वेद अध्यापन आदि | |
| अठ्ठाइसौं | केही शब्दार्थ, प्रायश्चित, उपाकर्म आदि | |
| उनन्तिसौं | पशुबलि एवं विकल्प (श्राद्ध विशेष) आदि | |

॥ श्री गणेशाय नमः ॥

ॐ

श्री परमात्मने नमः

# ॥ अथ कात्यायनस्मृतिः ॥

## ॥ प्रथमः खण्डः ॥
## (पहिलो खण्ड)

### । अथाचाराध्यायः ।
### (आचार सम्बन्धी अध्याय)

### । तत्रादौ यज्ञोपवितकर्मप्रकरणवर्णनम् ।
### (जनै आदि)

**अथातो गोभिलोक्तानामन्येषां चैव कर्मणाम् ।**
**अस्पष्टनां विधिं सम्यग्दर्शयिष्ये प्रदीपवत् ॥१॥**

अब यसपछि गोभिल ऋषिले बताएका र अन्य अस्पष्ट कर्मका विधिका बारेमा बत्तीले प्रकाश पारेझैं गरी राम्ररी प्रकाश पार्दछु (बताउँदछु) ।

### जनै बनाउने विधि

**त्रिवृदूर्ध्ववृतं कार्यं तन्तुत्रयमधोवृतम् ।**
**त्रिवृत्तश्चोपवीतं स्यात्तस्यैको ग्रन्थिरिष्यते ॥२॥**

तेबर पारेर मास्तिर र तलतिर बाटिएका तीन डोरे जनै बनाउनु पर्दछ । त्यसमा एउटा गाँठो पार्नु पर्दछ ।

### जनैको लम्बाइ

**पृष्ठवंशे च नाभ्यां च धृतं यद्विन्दते कटिम् ।**
**तद्धार्यमुपवीतं स्यान्नातो लम्बं न चोच्छ्रितम् ॥३॥**

पिठिउँ र नाइटो हुँदै कमर सम्म पुग्ने जनै नै लगाउन योग्य जनै हो । यसभन्दा लामो वा छोटो हुनु हुँदैन ।

### जनै नलगाई र टुपी शिखा नपारी कुनै पनि धर्मकर्म नगर्नू

**सदोपवीतिना भाव्यं सदा बद्धशिखेन च ।**

**विशिखो व्युपवीतश्च यत् करोति न तत्कृतम् ॥४॥**

सधैं जनै लगाएर र टुपी शिखा (गाँठो) पारेर बस्नू । टुपी शिखा नपारी र जनै नलगाई मानिस जे कार्य गर्दछ त्यो नगरेको समान हुन्छ ।

## अङ्गस्पर्शका विधान

**त्रिः प्राश्यापो द्विरुन्मृज्य मुखमेतान्युपस्पृशेत् ।**
**आस्यनासाक्षिकर्णांश्च नाभिवक्षःशिरोंऽसकान् ॥५॥**

तीन पटक आचमन गरी दुई पटक मुख पुछी मुख, नाक, आँखा, कान, नाइटो, छाती, शीर र काँध छुनू ।

**संहताभिस्त्र्यङ्गुलिभिरास्यमेवमुपस्पृशेत् ।**
**अङ्गुष्ठेन प्रदेश्निया घ्राणं चैवमुपस्पृशेत् ।**
**अङ्गुष्ठानामिकाभ्याञ्च चक्षुः श्रोत्रं पुनः पुनः ॥६॥**

यसरी, जोरिएका तीन औंलाले मुख छुनू, बुढी र चोर औंलाले नाक छुनू तथा बुढी र साहिँली औंलाले आँखा र कानलाई पटकपटक छुनू ।

**कनिष्ठाङ्गुष्ठयोर्न्नाभिं हृदयं तु तलेन वै ।**
**सर्वाभिस्तु शिरः पश्चाद् बाहू चाग्रेण संस्पृशेत् ॥७॥**

बुढी र कान्छी औंलाले नाइटो, हत्केलाले हृदय, सबै औंलाले शीर तथा सबैभन्दा पछाडि हातको अघिल्लो भागले दुवै हात (काँध) छुनू ।

## कर्म कुन हातले गर्ने ?

**यत्रोपदिश्यते कर्म कर्तुरङ्गं र तूच्यते ।**
**दक्षिणस्तत्र विज्ञेयः कर्मणां पारगः करः ॥८॥**

जहाँ कर्मको उपदेश गरएको छ तर कुन अङ्गले गर्ने भनी उल्लेख छैन त्यहाँ कर्म गर्दा दाहिने हातको प्रयोग गर्नू ।

## कर्म कता फर्केर गर्ने ?

**यत्र दिङ्नियमो न स्याज्जपहोमादिकर्मसु ।**

जहाँ जप, होम आदि कर्ममा दिशाको विधान छैन त्यहाँ पूर्व, उत्तर र पश्चिम गरी तीन दिशा बताइएको छ ।

## कर्म बसेर कि उठेर गर्ने ?

**तिस्रस्तत्र दिशः प्रोक्ता ऐन्द्रीसौम्यापराजिताः ॥९॥**
**तिष्ठन्नासीनः प्रह्वो वा नियमो यत्र नेदृशः ।**
**तदासीनेन कर्त्तव्यं न पह्वेण न तिष्ठता ॥१०॥**

जहाँ कर्म गर्दा उठेर, बसेर वा निहुरेर के गरेर गर्ने भनी नियम बताइएको छैन त्यहाँ सो कर्म बसेर गर्नू, उभिएर वा निहुरेर होइन ।

## षोडशमातृका र गणेश पूजा

**गौरी पद्मा शची मेधा सावित्री विजया जया ।**
**देवसेना स्वधा स्वाहा मातरो लोकमातरः ॥११॥**
**हृष्टिः पुष्टिस्तथा तुष्टिरात्मदेवतया सह ।**
**गणेशेनाधिका ह्येता वृद्धौ पूज्याश्च षोडश ॥१२॥**

गौरी, पद्मा, शची, मेधा, सावित्री, विजया, जया, देवसेना, स्वधा, स्वाहा, हृष्टि, पुष्टि तथा आत्मदेवता सहितका तुष्टि यी सोह्र माताहरु लोकमाता हुन् । वृद्धि श्राद्धमा यी माताका साथ गणेश पनि सामेल गरी पूजा गर्न योग्य हुन्छन् ।

**कर्मादिषु तु सर्वेषु मातरः सगणाधिपाः ।**
**पूजनीयाः प्रयत्नेन पूजिताः पूजयन्ति ताः ॥१३॥**

सबै कर्ममा माताहरु गणेश सहित पूजनीय हुन्छन् । तिनीहरु पूजा गरिएका मानिसलाई पूजाको योग्य बनाउँदछन् ।

**प्रतिमासु च शुभ्रासु लिखित्वा वा पटादिषु ।**
**अपि वाक्षतपुञ्जेषु नैवेद्यैश्च पृथग्विधैः ॥१४॥**

सेता प्रतिमामा अथवा कपडा आदिमा लेखेर अथवा चामलको थुप्रोमा भिन्न-भिन्न प्रकारका नैवेद्यले यिनको पूजा गर्नू ।

**कुड्यलग्नां वसोर्द्धारां सप्तधारां घृतेन तु ।**
**कारयेत् पञ्चधारां वा नातिनीचां न चोच्छ्रिताम् ॥१५॥**

घिउले भित्तामा सात वा पाँच वटा न धेरै अग्ला न धेरै होचा धारा बनाउन लगाउनू ।
नोट : यसलाई प्रचलनको भाषामा “वसुधारा” भनिन्छ ।

**आयुष्याणि च शान्त्यर्थं जप्त्वा तत्र समाहितः ।**
**षड्भ्यः पितृभ्यस्तदनु भक्त्या श्राद्धमुपक्रमेत् ॥१६॥**

त्यसपछि त्यहाँ सावधानीपूर्वक शान्तिका लागि आयुष्य मन्त्र जपेर त्यसपछि छ वटा पितृहरुका लागि भक्तिपूर्वक श्राद्धको विधान गर्नू ।

**अनिष्ट्वा तु पितॄंश्छ्राद्धे न कुर्यात् कर्म वैदिकम् ।**
**तत्रापि मातरः पूर्वं पूजनीया प्रयत्नतः ॥१७॥**

श्राद्धमा पितृको पूजा नगरी वैदिक कर्म नगर्नू । त्यसमा पनि माताहरु सर्वप्रथम प्रयत्नपूर्वक पूजनीय हुन्छन् ।

**वसिष्ठोक्तो विधिः कृत्स्नो द्रष्टव्योऽत्र निरामिषः ।**
**अतः परं प्रवक्ष्यामि विशेष इह यो भवेत् ॥१८॥**

यस बारेमा वसिष्ठ ऋषिले बताएका सबै निरामिष (मासु बिनाको) विधिका बारेमा विचार गर्नु पर्दछ । अब यसपछि यस सम्बन्धमा जे जति विशेष कुरा छन् ती सबै कुरा बताउनेछु ।

॥ इति प्रथमः खण्डः ॥१॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको पहिलो खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-०+१८=१८
शुरुदेखिको श्लोलसङ्ख्या : १८

## ॥ अथ द्वितीयः खण्डः ॥
## (दोश्रो खण्ड)

## । अथ नित्यनैमित्तिक (श्राद्ध) कर्म वर्णनम् ।
## (श्राद्धकर्म)

### ब्राह्मण निमन्त्रणा

**प्रातरामन्त्रितान् विप्रान् युग्मानुभयतस्तथा ।**
**उपवेश्य कुशान् दद्यादृजुनैव हि पाणिना ॥१॥**

निमन्त्रित जोर संख्याका ब्राह्मणहरुलाई बिहान आएपछि पितृपक्ष र मातृपक्ष दुवैतिर बसाली दाहिने हातले कुश समाउन दिनू ।

## कुशको प्रयोग

**हरिता यज्ञिया दर्भाः पीतकाः पाकयज्ञियाः ।**
**समूलाः पितृदैवत्याः कल्माषा वैश्वदेविकाः ॥२॥**

यज्ञमा हरियो, पाकयज्ञमा पहैँलो, पितृपूजामा जरा सहितको तथा विश्वदेव कर्ममा प्रयोगमा आउने कुश कालो टिका भएको हुन्छ ।

**हरिता वै सपिञ्जलाः शुष्काः स्निग्धाः समाहिताः ।**
**रत्निमात्रा प्रमाणेन पितृतीर्थेन संस्तृताः ॥३॥**

हरियो, पहैँलो पात भएको, सुकेको, चिल्लो, साबधानीपूर्वक राखिएको र एक मुडिहातको कुश पितृतीर्थमा धारण गरिन्छ ।

**पिण्डार्थं ये स्तृता दर्भास्तर्पणार्थं तथैव च ।**
**धृतैः कृते च विण्मूत्रे त्यागस्तेषां विधीयते ॥४॥**

जुन कुश पिण्ड वा तर्पणका लागि तथा मलमूत्र त्याग गर्दा धारण (प्रयोग) गरिन्छ त्यो त्याग गर्ने विधान छ ।

## कर्म गर्दा घुँडा मार्ने विधान

**दक्षिणं पातयेज्जानु देवान् परिचरन् सदा ।**
**पातयेदितरज्जानु पितृन् परिचरन्नपि ॥५॥**

सधैं देवताको पूजा गर्दा दाहिने घुँडा तथा पितृको पूजा गर्दा दोश्रो (देब्रे) घुँडा जमिनमा टेकाउनू ।

**निपातो नहि सव्यस्य जानुनो विद्यते क्वचित् ।**
**सदा परिचरेद्भक्त्या पितृनप्यत्र देववत् ॥६॥**

“बायाँ घुँडा टेक्नू” भनेर अन्य कुनै कर्ममा भनिएको छैन, यसलोकमा देवताको भैं पितृको भक्तिपूर्वक सेवा गर्दा यसरी नै घुँडा मारेर गर्नू ।

## पितृको आवाहन आदि कार्य

**पितृभ्य इति दत्तेषु उपवेश्य कुशेषु तान् ।**
**गोत्रनामभिरामन्त्र्य पितृनर्घं प्रदापयेत् ॥७॥**

“पितृभ्यः...” आदि मन्त्र पढी पितृहरूलाई बोलाई (आवाहन गरी) तिनका लागि दिइएका कुशासनमा तिनलाई बसाई गोत्र र नाम सहित अर्घ दिनू ।

**नात्रापसव्यकरणं न पित्र्यं तीर्थमिष्यते ।**
**पात्राणां पूरणादीनि दैवेनैव हि कारयेत् ॥८॥**

यसो गर्दा अपसव्य र पितृतीर्थबाट गर्नु पर्ने विधान छैन, पात्र भर्ने आदि काम भने देवतीर्थले नै गर्नू ।

**ज्येष्ठोत्तरकरान् युग्मान् कराग्राग्रपवित्रकान् ।**
**कृत्वार्घ्यं संप्रदातव्यं नैकैकस्यात्र दीयते ॥९॥**

दुईटा ब्राह्मणमध्ये जेठाको हातलाई कान्छाको हातमाथी राख्न लगाई हातको अघिल्लो भागमा पवित्र अघिल्तिर पारी अर्घ दिनुपर्दछ । कुनै पनि एक्लोबाट अर्घ दिइँदैन ।

## पवित्र

**अनन्तर्गर्भिणं साग्रं कौशं द्विदलमेव च ।**
**प्रादेशमात्रं विज्ञेयं पवित्रं यत्र कुत्रचित् ॥१०॥**

नचिरिएको, टुप्पो सहितको, दुई पाते र एक कुरेत लामो कुशले बनेकोलाई नै सबैतिर ‘पवित्र’ भनी मानिन्छ ।

नोट : एक कुरेत लामो कुश बटारेर दोब्र्याई एक पटकमात्र एउटा टुप्पो घुमाएर अर्को टुप्पो बाँधिने गरी गाँठो पार्दा बन्न जाने पवित्र नामको कुश । यो भित्रैसम्म गुभो भएको टुप्पोसहितको र एक कुरेत लामो हुन्छ । यस्तो पवित्र चारवटा कुशको ब्राह्मणको लागि, तीनवटा कुशको क्षत्रियको लागि, दुईवटा कुशको वैश्यको लागि र एउटा कुशको शूद्रको लागि बनाइन्छ । अथवा चारै वर्णको लागि दुई-दुई कुशको पवित्र बनाइने विधान छ । (के.यन.स्वामी)

## कुशको पिञ्जली आदि

**एतदेव हि पिञ्जल्या लक्षणं समुदाहृतम् ।**
**आज्यस्योत्पवनार्थं यत्तदप्येतावदेव तु ॥११॥**

पिञ्जलीको पनि यही (पवित्रकै) लक्षण बताइएको छ । जुन घिउ छान्नका लागि कुशको प्रयोग हुन्छ त्यो पनि यति नै नापोको हुन्छ ।

नोट : पिञ्जली : कुशान्तरवेष्टितप्रादेशमात्रकुशपत्रद्वयम् । अस्या नामान्तरं पवित्रम् । (शब्दकल्पद्रुमः) ।

**एतत्प्रमाणामेवैके कौशीमेवार्द्रमञ्जरीम् ।**
**शुष्कां वा शीर्णकुसुमां पिञ्जलीं परिचक्षते ॥१२॥**

केही आचार्य यतिनै (पवित्रकै) नापोको कुशको चिसो पातलाई अथवा फूल झरेको सुकेको पातलाई "पिञ्जली" भन्दछन् ।

## कर्म गर्दा आचमन गर्नुपर्ने विधान

**पित्र्यमन्त्रानुद्रवण आत्मालम्भेऽधमेक्षणे ।**
**अधोवायुसमुत्सर्गे प्रहासेऽनृतभाषणे ॥१३॥**
**मार्जारमूषकस्पर्श आक्रुष्टे क्रोधसम्भवे ।**
**निमित्तेक्ष्वेषु सर्वत्र कर्म कुर्वन्नपः स्पृशेत् ॥१४॥**

सबै कर्म गर्दा कर्ताले पितृका मन्त्र हडबढमा गढबढ गरी उच्चारण गरे, शरीर छोइए, अधमलाई देखे, अपानवायू गए, हाँसे, झूटो बोले तथा बिरालो र मुसो छोइए, चिच्याए एवं रिसाए आचमन गर्नू ।

॥ इति द्वितीयः खण्डः ॥२॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको दोश्रो खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-१८+१४=३२
शुरुदेखिको श्लोलसङ्ख्या : ३२



## ॥ अथ तृतीयः खण्डः ॥
## (तेश्रो खण्ड)

## कर्म नगरिए सरहका अवस्था

**अक्रिया त्रिविधा प्रोक्ता विद्वद्भिः कर्मकारिणाम् ।**
**अक्रिया च परोक्ता च तृतीया चायथाक्रिया ॥१॥**

कर्मगर्नेका लागि नराम्रा कर्म (नगरे सरहका) तीन थरी हुन्छन् भनी बताइएको छ-कर्म नगर्नु, अरुका शाखाले बताएको कर्मगर्नु र गर्नुपर्ने विधि अनुसार नगर्नु ।

## आफ्नो शाखामा बताएका विधिको अनुशरण गर्नू

**स्वशाखाश्रयमुत्सृज्य परशाखाश्रयञ्च यः ।**

**कर्त्तुमिच्छति दुर्मेधा मोघं तत्तस्य चेष्टितम् ॥२॥**

आफ्नु शाखासँग सम्बन्धित कर्म छोडी अर्काको कर्म गर्न चाहने दुष्टले चिताएको कुरा निष्फल हुन्छ ।

नोट : वेदको संहिताको पाठ तथा क्रमभेदलाई शाखा भनिन्छ । यो कैयौं ऋषिहरूद्वारा आ-आफ्नो गोत्र वा शिष्य परम्परामा चलाइएको हुन्छ । जसमध्ये ऋग्वेदका दुई शाखा छन् : साङ्ख्यायन र आश्वलायन । यिनमा एकहजार मन्त्र छन् । यजुर्वेदका सात शाखा छन् : काण्वी, माध्यन्दिनी, कठी, माध्यकठी, मैत्रायणी, तैत्तिरीय र वैशम्पायनीय । सामवेदका दुई शाखा छन् : कौथुमी र आथर्वणायनी (राणायनीया) । यिनमा वेद, आरण्यक, उक्था र ऊह यी चार गान छन् । यिनीहरूमा ९४२ मन्त्र छन् । अथर्ववेदका सुमन्तु, जाजलि, श्लोकायनि, शौनक, पिप्पलाद, मुञ्जकेश आदि शाखा प्रवर्तक ऋषिहरू छन् जसमा १६ हजार मन्त्र छन् । (अग्निपुराण) । नेपालका हामीजस्ता शुक्ल युजुर्वेदाध्यायी ब्राह्मणको शाखा माध्यन्दिनीय शाखा हो ।

**यन्नाम्नातं स्वशाखायां परोक्तमविरोधि च ।**
**विद्वद्भिस्तदनुष्ठेयमग्निहोत्रादिकर्मवत् ॥३॥**

(तर) आफ्नू शाखामा उल्लेख छैन अरुका शाखामा छ र त्यो आफ्नो शाखाको विरुद्ध छैन भने विद्वानले त्यसको अनुष्ठान पनि अग्निहोत्र आदि कर्मसमान गर्नू ।

## उल्टो कर्म गरिएको अवस्था

**प्रवृत्तमन्यथा कुर्याद्यदि मोहात् कथञ्चन ।**
**यतस्थदन्यथाभूतं तत एव समापयेत् ॥४॥**

केही गरी अज्ञानवश शुरु गरिएको कार्यलाई गर्नुपर्नेभन्दा उल्टो गरिन्छ भने जहाँबाट उल्टो भएको हो त्यहाँबाट पुनः शुरु गरी उक्त कर्म पूरा गर्नू ।

**समाप्ते यदि जानीयान्मयैतदयथाकृतम् ।**
**तावदेव पुनः कुर्यान्नावृत्तिः सर्वकर्मणः ॥५॥**

कर्म सकिएपछि कर्तालाई आफूले गरेको कर्म उल्टो भएको रहेछ भन्ने कुरा थाहा भएमा, उल्टो भएको जति कर्म फेरी गर्नू । सबै कर्म दोहोर्‍याउनु पर्दैन ।

**प्रधानस्याक्रिया यत्र साङ्गं तत् क्रियते पुनः ।**
**तदङ्गस्याक्रियायाञ्च नावृत्तिर्नैव तत्क्रिया ॥६॥**

कर्मको मुख्यकर्म अहिलेसम्म गरि सकिएको छैन, तर कुनै कर्म उल्टो भएको छ भनी थाहा पाइएको अवस्थामा सबै कर्म फेरी गर्नू । मुख्यकर्म गरि सकिएको भए सबै कर्म दोहोर्‍याउनु पर्दैन ।

## कर्ममा (ब्राह्मण) भोजन

**मधु मध्विति यस्तत्र त्रिर्जपोऽशितुमिच्छताम् ।
गायत्र्यनन्तरं सोऽत्र मधुमन्त्रविवर्जितः ॥७॥**

भोजन गर्न चाहनेले "मधु, मधु, मधु" तीन पटक जप्नू । श्राद्धमा "मधु वाता ऋतायते" आदिलाई छाडी अरु मन्त्र गायत्री मन्त्र जपेपछि तुरुन्त जप्नु पर्दछ ।

**न चाश्नत्सु जपेदत्र कदाचित् पितृसंहिताम् ।
अन्य एव जपः कार्यः सोमसामादिकः शुभः ॥८॥**

श्राद्धमा भोजन गरिरहँदा ब्राह्मणले पितृ-संहिता कहिल्यै नजप्नू, अरु सोम, साम आदि शुभ मन्त्र जप्नू ।

**सम्पन्नमिति तृप्ताः स्थ प्रश्नस्थाने विधीयते ।
सुसम्पन्नमिति प्रोक्ते शेषमन्नं निवेदयेत् ॥१०॥**

"तपाईंहरु अघाउनु भो (तृप्ताः स्थ) ?" को सट्टा "भोजन रुचिकर वा मिठो छ (सम्पन्नम्) ?" भनी यजमानले सोध्नू । ब्राह्मणले "धेरै रुचिकर छ (सुसम्पन्नम्)" भनेपछि (वा भनेको खण्डमा) बाँकी अन्न ( भोजन) पनि तिनलाई दिनू ।

नोट : यहाँ "सम्पन्न" शब्द "समाप्त" को साटो "मिठो" अर्थमा प्रयोग हुन्छ । पहिले पहिले श्राद्ध गर्दा सबै कुरा श्राद्धस्थलमै तयार गर्ने वा राख्ने विधान थियो । ब्राह्मणलाई खुवाए पछि बाँकी अन्नले उनको आज्ञा लिई पिण्डदान दिने प्रचलन थियो । अहिले यी सबै प्रक्रिया औपचारिकतामा सीमित हुन पुगेका छन् ।

## जलदान र पिण्डदान

**प्रागग्रेष्वथ दर्भेषु आद्यमामन्त्र्य पूर्ववत् ।
अपः क्षिपेन्मूलदेशेऽवनेनिक्ष्वेति पात्रतः ॥११॥**

अनि पूर्व टुप्पो भएका (फर्काइएका) कुशमा पितालाई पूर्वपितासमान आमन्त्रित गरी 'अवनेनिक्ष्व' मन्त्र पढी भाँडाको जललाई कुशको फेदतिर हाल्नू ।

**द्वितीयञ्च तृतीयञ्च मध्यदेशाग्रदेशयोः ।
मातामहप्रभृतींस्त्रीनेतेषामेव वामतः ॥१२॥**

पितामह र प्रपितामहलाई कुशको टुप्पोमा र बीचमा जल दिनू । मातामह आदि तीनलाई पनि यसको बायाँतिर जल दिनू ।

**सर्वस्मादन्नमुद्धृत्य व्यञ्जनैरुपसिच्य च ।**
**संयोज्य यवकर्कन्धूदधिभिः प्राङ्मुखस्ततः ॥१३॥**
**अवनेजनवत् पिण्डान् दत्त्वा बिल्वप्रमाणकान् ।**
**तत्पात्रक्षालनेनाथ पुनरप्यवनेजयेत् ॥१४॥**

त्यसपछि सबै अन्नबाट अलिअलि अन्न निकालेर त्यसमा सबै व्यञ्जन (तरकारी, अचार आदि), जौ, बयर र दही मिसाई, पूर्वतिर फर्की अवनेजन जहाँ जहाँ दिइएको थियो त्यहाँ त्यहाँ बेलको फल आकारको पिण्ड दिनू र त्यो भाँडोमा पुनः जलसेचन गर्नू ।

॥ इति तृतीयः खण्डः ॥३॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको तेश्रो खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्टयङ्काः-३२+१४=४६
शुरुदेखिको श्लोकसङ्ख्या : ४६

## ॥ अथ चतुर्थः खण्डः ॥
## (चौथो खण्ड)
## । अथ श्राद्धप्रकरणवर्णनम् ।
## (श्राद्ध प्रकरण)

### पिण्डदान क्रम

**उत्तरोत्तरदानेन पिण्डानामुत्तरोत्तरः ।**
**भवेदधश्चाधराणामधरश्राद्धकर्मणि ॥१॥**

उत्तरोत्तर क्रमले पिण्ड दिनाले पिण्डमा जुन पछिपछिको क्रम अनुसारको पिण्ड हुन्छ, त्यो तल पर्दछ । त्यसैले श्राद्धमा तलकालाई तलै पिण्ड दिनु पर्दछ ।

**तस्माच्छ्राद्धेषु सर्वेषु वृद्धिमत्स्वितरेषु च ।**
**मूलमध्याग्रदेशेषु ईषत्सक्तांश्च निर्वपेत् ॥२॥**

यसैले वृद्धिश्राद्ध वा अरु सबै खाले श्राद्धमा कुशको शुरु, मध्य र अग्र भागमा केही दलिएको पिण्ड दिनू ।

**गन्धादीन्निःक्षिपेत्तूष्णीं तत आचामयेद् द्विजान् ।**

**अन्यत्राप्येष एव स्याद्यवादिरहितो विधिः ॥३॥**

पिण्डमा धूप, चन्दन आदि चढाउनू । त्यसपछि ब्राह्मणलाई आचमन गराउनू । अन्य (पार्वण आदि) श्राद्धमा पनि जौ आदि नमिसाइएको यही पिण्डदान विधि हुने गर्दछ ।

**दक्षिणाप्लवने देशे दक्षिणाभिमुखस्य च ।**
**दक्षिणाग्रेषु दर्भेषु एषोऽन्यत्र विधिः स्मृतः ॥४॥**

अरु श्राद्धमा दक्षिणतिर होचो स्थानमा दक्षिणतिर फर्की बसेका जजमानका लागि दक्षिणतिरै टुप्पो फर्केका कुशमाथि पिण्डदान गर्ने विधि बताइएको छ ।

**अथाग्रभूमिमासिञ्चेत् सुसंप्रोक्षितमस्त्विति ।**
**शिवा आपः सन्त्विति च युग्मानेवोदकेन च ॥५॥**

त्यसपछि जजमानले "सु सं प्रोक्षितमस्तु" यो मन्त्रले आफू अगिल्तिरको भूमिमा जल छर्कनू । अनि "शिवा आपः सन्तु" मन्त्रले जोर पिण्डमा जलसेचन गर्नू ।

**सौमनस्यमस्त्विति च पुष्पदानमनन्तरम् ।**
**अक्षतञ्चारिष्टं चास्त्वित्यक्षतान् प्रतिपादयेत् ॥६॥**

"सौमनस्यमस्तु" यो मन्त्रले पिण्डमा फूल चढाउनू । अनि "अक्षतञ्चारिष्टञ्चास्तु" मन्त्रले अक्षाता चढाउनू ।

**श्राद्धमा सङ्कल्पको प्रयोग विधि**

**अक्षय्योदकदानं तु अर्घ्यदानवदिष्यते ।**
**षष्ठ्यैव नित्यं तत् कुर्यान्न चतुर्थ्या कदाचन ॥७॥**

अक्षय जलदान अर्घदान समान दिनू । यसमा सधैं षष्ठी विभक्तिको (पितुः आदि) प्रयोग गर्नू । कहिल्यै चतुर्थी विभक्तिको (पित्रे आदि) प्रयोग नगर्नू ।

**अर्घ्येऽक्षय्योदके चैव पिण्डदानेऽवनेजने ।**
**तन्त्रस्य तु निवृत्तिः स्यात् स्वधावाचन एव च ॥८॥**

अर्घ दान, अक्षय जलदान, पिण्डदान, अवनेजन र स्वधावाचनमा एउटै सङ्कल्प प्रयोग गर्न निषेध छ ।

**पिण्डदान**

**प्रार्थनासु प्रतिप्रोक्ते सर्वास्वेव द्विजोत्तमैः ।**
**पवित्रान्तर्हितान् पिण्डान् सिञ्चेदुत्तानपात्रकृत् ॥९॥**

जजमानका सबै अनुरोधलाई ब्राह्मणहरूले सम्बोधन गरिसकेपछि अर्घपात्रलाई सिधा गरी पवित्रले ढाकिएको पिण्डलाई सेचन गर्नू ।

**युग्मानेव स्वस्ति वाच्यमङ्गुष्ठाग्रग्रहंसदा ।**
**कृत्वा धुर्यस्य विप्रस्य प्रणम्यानुव्रजेत्ततः ॥१०॥**

श्राद्धमा सधैं दुई-दुई ब्राह्मणबाट स्वस्तिवाचन गराएर बूढी औंलाको टुप्पो समाती मुख्य ब्राह्मणलाई नमस्कार गरी उनको पछि पछि हिँड्नू ।

**एष श्राद्धविधिः कृत्स्न उक्तः संक्षेपतो मया ।**
**ये विन्दन्ति न मुह्यन्ति श्राद्धकर्मसु ते क्वचित् ॥११॥**

यो श्राद्धको विधि संक्षेपमा मबाट बताइएको छ । जो यस अनुसार श्राद्ध गर्दछन् (वा गराउँदछन्) ती श्राद्धकर्ममा कतै पनि मोहमा पर्दैनन् ।

**इदं शास्त्रञ्च गुह्यञ्च परिसंख्यानमेव च ।**
**वसिष्ठोक्तञ्च यो वेद स श्राद्धं वेद नेतरः ॥१२॥**

जो यस शास्त्रलाई, यस शास्त्रमा बताइएका गोप्य विधिलाई, यसमा गणना गरिएका सबै कर्मलाई र वसिष्ठ ऋषिले बताएका शास्त्रलाई जान्दछ, उसैले श्राद्धलाई जान्दछ, अरुले होइन ।

॥ इति चतुर्थः खण्डः ॥४॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको चौथो खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्टयङ्काः-४६+१२=५८
शुरुदेखिको श्लोलसङ्ख्या : ५८

## ॥ अथ पञ्चमः खण्डः ॥
## (पाँचौं खण्ड)
## । अथ श्राद्धप्रकरणवर्णनम् ।
## (श्राद्ध प्रकरण)

### मातृका पूजा र नान्दीमुखी

**असकृद् यानि कर्माणि क्रियेरन् कर्मकारिभिः ।**
**प्रतिप्रयोगं नैताः स्युर्मातरः श्राद्धमेव च ॥१॥**

कर्म गर्नेहरुबाट जो कर्म पटकपटक गरिन्छ, ती प्रत्येक कर्ममा मातृकापूजन र नान्दीमुखी श्राद्ध गर्रिँदैन ।

**आधाने होमयोश्चैव वैश्वदेवे तथैव च ।**
**बलिकर्मणि दर्शे च पौर्णमासे तथैव च ॥२॥**
**नवयज्ञे च यज्ञज्ञा वदन्त्येवं मनीषिणः ।**
**एकमेव भवेच्छ्राद्धमेतेषु न पृथक् पृथक् ॥३॥**

गर्भाधानमा, दुवै कालका होममा, वैश्वदेवमा, बलिकर्ममा, औँसीको यज्ञमा, पूर्णिमाको यज्ञमा तथा नवयज्ञमा यज्ञका सम्बन्धमा जानेका विद्वानहरुले यस्तो भन्दछन् कि यी कार्यमा एउटा मात्र श्राद्ध गरिन्छ, बेग्लाबेग्लै होइन ।

## श्राद्ध र जातकर्मका नियम

**नाष्टकासु भवेच्छ्राद्धं न श्राद्धे श्राद्धमिष्यते ।**
**न सोष्यन्तीजातकर्म प्रोषितागतकर्मसु ॥४॥**

अष्टकामा श्राद्ध हुँदैन । श्राद्ध भित्र श्राद्ध हुँदैन । परदेशबाट सुत्केरी हुन छटपटाउँदै घर आएकी स्त्रीबाट जन्मने शिशुको जातकर्म संस्कार हुँदैन ।

नोट : बालक जन्मनासाथ उसलाई साहिँली औँलाले घिउ, मह चटाइने तथा कुनै रोग नलागोस्, दीर्घजीवी र भाग्यमानी होस् भनी उसका छाती (मुटु) आदि अङ्गहरू छुने विधि भएको सोह्र संस्कार मध्येको एक संस्कारलाई जातकर्म संस्कार भनिन्छ ।

**विवाहादिः कर्मगणो य उक्तो गर्भाधानं शुश्रुम यस्य चान्ते ।**
**विवाहादावेकमेवात्र कुर्याच्छ्राद्धं नादौ कर्मणः कर्मणः स्यात् ॥५॥**

विवाह आदि जो कर्म समूह बताइएका छन् तथा त्यसपछिका गर्भाधान संस्कारका विषयमा जे हामी सुन्दछौं, त्यस सम्बन्धमा विवाहको शुरुमा नै एउटा श्राद्ध गर्नू । प्रत्येक कर्मको शुरुमा श्राद्ध हुँदैन ।

**प्रदोषे श्राद्धमेकं स्याद् गोनिष्क्रामप्रवेशयोः ।**
**न श्राद्धं युज्यते कर्त्तुं प्रथमे पुष्टिकर्मणि ॥६॥**

साँझमा एउटै श्राद्ध हुन्छ । गाई निकाल्दा र लेराउँदा पनि एउटै श्राद्ध हुन्छ । पास्नीमा श्राद्ध गर्नु उचित हुँदैन ।

**हलाभियोगादिषु तु षट्सु कुर्यात् पृथक् पृथक् ।**
**प्रतिप्रयोगमप्येषामादावेकन्तु कारयेत् ॥७॥**

हलो जोत्ने आदि पाँच कर्ममा बेग्लाबेग्लै श्राद्ध गर्नू । यी प्रत्येक कर्मको शुरुमा एउटा श्राद्ध गराउनू ।

**बृहत्पत्त्रिक्षुद्रपशुस्वस्त्यर्थं परिविष्यतोः ।**
**सूर्येन्द्वोः कर्मणी ये तु तयोः श्राद्धं न विद्यते ॥८॥**

ठूला चरा र साना जन्तुका कल्याणका लागि गरिएका कर्ममा तथा मण्डलले घेरिएका चन्द्रसूर्यका कर्ममा (वा ग्रहण कर्ममा) श्राद्ध हुँदैन ।

**न दशाग्रन्थिके चैव विषवद्दष्टकर्मणि ।**
**कृमिदष्टचिकित्सायां नैव शेषेषु विद्यते ॥९॥**

कपडाको छेउ गाँठो पार्ने कर्ममा, विषालु जन्तुले डस्दा गरिने कर्ममा, कीराले टोकेर गरिने औषधी उपचारमा तथा बाँकी कर्ममा श्राद्ध हुँदैन ।

**गणशः क्रियमाणेषु मातृभ्यः पूजनं सकृत् ।**
**सकृदेव भवेच्छ्राद्धमादौ न पृथगादिषु ॥१०॥**

गण अनुसारका कृया गरिसकेपछि मातृकाको पूजा एक पटक हुन्छ । शुरुमा एक पटक नै श्राद्ध हुन्छ, सबैको शुरुमा बेग्लाबेग्लै श्राद्ध हुँदैन ।

**यत्र यत्र भवेच्छ्राद्धं तत्र तत्र च मातरः ।**
**प्रासांगिकमिदं प्रोक्तमतः प्रकृतमुच्यते ॥११॥**

जहाँजहाँ श्राद्ध हुन्छ त्यहाँत्यहाँ मातृकाको पूजा हुन्छ भनी प्रसङ्गवश भनिएको हो, मूल कुरो अब (यसपछि) भनिन्छ ।

॥ इति पञ्चमः खण्डः ॥५॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको पाँचौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-५८+११=६९
शुरुदेखिको श्लोलसङ्ख्या : ६९



**॥ अथ षष्ठः खण्डः ॥**

## (छैटौं खण्ड)

## । अथानेककर्मवर्णनम् ।
## (अनेक किसिमका कर्म)

### अग्नि जगाउने कार्य

**आधानकाला ये प्रोक्तास्तथा याश्चाग्नियोनयः ।**
**तदाश्रयोग्निमादध्यादग्निमानग्रजो यदि ॥१॥**

अग्नि जगाउने समय र स्थानका जुन् कुरा बताइएका छन् जगाउने व्यक्ति जेठो भाई भए तिनै कुरालाई आधार मानी अग्नि जगाउनू ।

नोट : होम गर्ने वा गार्हपत्य अग्नि स्थापना गर्ने (बाल्ने) कार्यलाई आधान भनिन्छ ।

### परिवेत्ता र परिवित्ति

**दाराधिगमनाधाने यः कुर्यादग्रजाग्रिमः ।**
**परिवेत्ता स विज्ञेयः परिवित्तिस्तु पूर्वजः ॥२॥**

भाईहरु दाजुभन्दा पहिले विवाह तथा अग्निको स्थापना गर्दछन् भने तिनलाई परिवेत्ता र दाजुहरुलाई परिवित्ति भनिन्छ ।

**परिवित्तिपरिवेत्तारौ नरकं गच्छतो ध्रुवम् ।**
**अपि चीर्णप्रायश्चित्तौ पादोनफलभागिनौ ॥३॥**

परिवित्ति तथा परिवेत्ता निश्चय नै नरक जान्छन् । यदि दुवैले प्रायश्चित गरे भनेपनि ती चौथाई फल भोग्ने नै हुन्छन् ।

**देशान्तरस्थक्लीबैकवृषणानसहोदरान् ।**
**वेश्यातिसक्तपतितशूद्रतुल्यातिरोगिणः ॥४॥**
**जडमूकान्धवधिरकुब्जवामनकुण्डकान् ।**
**अतिवृद्धानभार्यांश्च कृषिसक्तान्नृपस्य च ॥५॥**
**धनवृद्धिप्रसक्तांश्च कामतः कारिणस्तथा ।**
**कुलटोन्मत्तचौरांश्च परिविन्दन्न दुष्यति ॥६॥**

परदेशमा रहेको, नपुंसक, एउटा अण्डकोष भएको, साक्खे दाजु नभएको, वेश्यामा अति आसक्त, पतित, शूद्रसमान भई बाँचेको, अती रोगी, महा अज्ञानी, लाटो, अन्धो, बहिरो, कुब्जो, पुड्को, कुण्डक, धेरै बुढो,

पत्नी-रहीत (कुनै कारणवश पहिली पत्नी नभएको), राजाको खेतीमा लागेको, धन कमाउनमा मस्त, स्वेच्छाचारी, दैलो चहार्ने, उन्मत्त र चोर-यस्तो दाजुलाई छोडेर पहिले नै विवाह तथा अग्नि स्थापना गर्ने भाई दोषी हुँदैन ।

**धनवार्द्धुषिकं राजसेवकं कर्षकं तथा ।**
**प्रोषितश्च प्रतीक्षेत वर्षत्रयमपि त्वरन् ॥७॥**

दाजु ब्याज खाएर धन बढाउनमा लागेको, राजाको नोकरी गर्ने, कृषक र परदेश गएको भए विवाह र अग्नि स्थापना गर्न चाँडैमा पनि भाईले तीन वर्ष कुर्नू ।

**प्रोषितं यद्यश्रृण्वानमब्दादूर्ध्वं समाचरेत् ।**
**आगते तु पुनस्तस्मिन् पादं तच्छुद्धये चरेत् ॥८॥**

दाजु विदेशमा छन् तर मरेबाँचेको खबर छैन भने भाईले एक वर्ष पछि विवाह र अग्नि स्थापना गर्नू । त्यसपछि दाजु फर्के चौथाई प्रायश्चित गर्नू ।

## रेखीको नापो

**लक्षणे प्राग्गतायास्तु प्रमाणं द्वादशाङ्गुलम् ।**
**तन्मूलसक्ता योदीची तस्या एतन्नवोत्तरम् ॥९॥**

मण्डपको पूर्वतिरको रेखी बाह्र अङ्गुल (अमल)को र त्यसको मूलबाट जोडिएको उत्तरतिरको रेखीको नापो नौ अङ्गुल बढी अर्थात् एक्काइस अङ्गुलको हुन्छ ।

नोट : उपलब्ध ठाउँ हेरी रेखीको आकार घटाउने वा बढाउने नगर्नू ।

**उदग्गतायाः संलग्नाः शेषाः प्रादेशमात्रिकाः ।**
**सप्त सप्ताङ्गुलांस्त्यक्त्वा कुशेनैव समुल्लिखेत् ॥१०॥**

उत्तरतिरको रेखीमा जोडिने बाँकी सबै रेखी एक कुरेत मात्रका हुन्छन् । यज्ञकुण्डबाट सात-सात अङ्गुलको अन्तर छाडेर कुशले नै रेखी हाल्ने काम गर्नू ।

नोट : आजकल हातले नै खूब आकर्षक रेखी हाल्ने प्रचलन छ । हातले नै रेखी हाल्ने हो भने पनि हातमा कुश समेत लिइएको हुनुपर्दछ ।

**मानक्रियायामुक्तायामनुक्ते मानकर्त्तरि ।**
**मानकृद्यजमानः स्याद्विदुषामेष निश्चयः ॥११॥**

जहाँ नापो बताइएको छ तर कस्ले नाप्ने भनिएको छैन त्यहाँ जजमान नै नापक हुन्छ, विद्वानको यही निश्चय छ ।

## अग्निस्थापना र विवाह

**पुण्यवानादधीताग्निं सहि सर्वैः प्रशस्यते ।**
**अनर्द्धुकत्वं यत्तस्य काम्यैस्तन्नीयते शमम् ॥१२॥**

पुण्यवानले नै अग्नि स्थापना गर्नू । उसैको नै सबैले प्रशंसा गर्दछन् । त्यो अग्नि जसलाई सबैतिर बढ्नु छैन ती काम्य कर्म (कुनै कामना सफल होस् भनी गरिने कर्म) बाट नै शान्त हुन्छन् ।

**यस्य दत्ता भवेत् कन्या वाचा सत्येन केनचित् ।**
**सोन्त्यां समिधमाधास्यन्नादधीतैव नान्यथा ॥१३॥**

जसलाई कसैले कन्या दिने वचन दिएको छ, उसले अन्तमा समिधाले अग्नि स्थापना गर्न चाहँदा कुनै अरु स्त्रीका साथमा स्थापना नगर्नू (पत्नीसँगै गर्नू)।

**अनूढैव तु सा कन्या पञ्चत्वं यदि गच्छति ।**
**न तथा व्रतलोपोऽस्य तेनैवान्यां समुद्वहेत् ॥१४॥**

कामकुरो छिनि सकेकी ती कन्या विवाह नगर्दै दैववश परलोक गइन् भने पनि त्यसका कारण उसको व्रत लोप हुँदैन, त्यही अग्निले अर्की कन्या विवाह गर्नू ।

**अथ चेन्न लभेतान्यां याचमानोऽपि कन्यकाम् ।**
**तमग्निमात्मसात् कृत्वा क्षिप्रं स्यादुत्तराश्रमी ॥१५॥**

अनुनय गरेर पनि अर्की कन्या नपाए त्यही अग्निलाई आत्मसात् गरी वानप्रस्थी वा सन्यासी हुनू ।

॥ इति षष्ठः खण्डः ॥६॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको छैटौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-६९+१५=८४
शुरुदेखिको श्लोलसङ्ख्या : ८४



**॥ अथ सप्तमः खण्डः ॥**
**(सातौं खण्ड)**

## । अथ शमीगर्भाद्यनेकप्रकरणवर्णनम् ।
## (अरणी मन्थन आदि)

### अरणी मन्थन विधि

**अश्वत्थो यः शमीगर्भः प्रशस्तोर्वीसमुद्भवः ।**
**तस्य या प्राङ्मुखी शाखा वोदीची वोद्ध्वर्गापि वा ॥१॥**
**अरणिस्तन्मयी प्रोक्ता तन्मय्येवोत्तरारणिः ।**
**सारवद्दारवं चात्रमोविली च प्रशस्यते ॥२॥**

उत्तम जमिनको, गर्भमा शमी उम्रेको पिपलको रुखको पूर्व, उत्तर वा आकाशतिर फर्केको हाँगाको अरणि र त्यसैले बनेको उत्तरारणि भनिएको छ । त्यसैको बलियो काठबाट बनेको चत्र र ओविली उत्तम मानिएको छ ।

नोट :- यज्ञको हागो पार्न बनाइने पीपलको बोटमा उम्रेको शमीको काठको सामानलाई अरणि भनिन्छ । यसमा तल रहने काठलाई अधरारणि भनिन्छ र यसैमा प्वाल पारी कपास वा कुश राखिन्छ । यसपछि त्यसैमाथि प्वालमा अर्को काठ राखिन्छ जसलाई उत्तरारणि भनिन्छ । उत्तरारणिमा डोरी बेरी घारघुर पारी घुमाउँदा रगडिएर आगो सल्किन्छ । यो कर्म गर्दा वैदिक मन्त्र पढ्ने गरिन्छ । चात्र भनेको अग्निमन्थन गर्दाको खयरको काठ हो । उत्तरारणिलाई थिच्न प्रयोग गरिने बाह्र अमल लामो काठलाई ओविली भनिन्छ । यसमा मथ्न प्रयोग गरिने डोरीलाई नेत्र भनिन्छ ।

**संसक्तमूलो यः शम्याः स शमीगर्भ उच्यते ।**
**अलाभे त्वशमीगर्भादुद्धरेदविलम्बितः ॥३॥**

जुन पिपलको बोटमा शमीको भित्रसम्म पसेका जरा हुन्छन् त्यसलाई शमीगर्भ भनिन्छ । यस्तो नभेटिए शमीको गर्भ नभएको पिपलको हाँगालाई तुरुन्त उखेल्नू ।

**चतुर्विंशतिरङ्गुष्ठदैर्घ्यं षडपि पार्थिवम् ।**
**चत्वार उच्छ्रये मानमरण्योः परिकीर्तितम् ॥४॥**

चौबीस अङ्गुल लामो, पाँच अङ्गुल चौडा र चार अङ्गुल अग्लो दुवै अरणीको नापो बताइएको छ ।

**अष्टाङ्गुलः प्रमन्थः स्याच्चात्रं स्याद् द्वादशाङ्गुलम् ।**
**ओविली द्वादशैव स्यादेतन्मन्थनयन्त्रकम् ॥५॥**

आठ अङ्गुलको प्रमन्थ, बाह्र अङ्गुल (अमल) को चात्र र बाह्र अङ्गुलकै ओविली हुन्छ । यी सबै मिलाएर मन्थन-यन्त्र बन्दछ ।

**अङ्गुष्ठाङ्गुलमानन्तु यत्र यत्रोपदिश्यते ।**

**तत्र तत्र बृहत्पर्वग्रन्थिभिर्मिनुयात् सदा ॥६॥**

जहाँजहाँ अङ्गुष्ठ या अङ्गुल या अमलको नापो बताइएको हुन्छ, त्यहाँत्यहाँ सधैं बृहत्पर्वग्रन्थि (औंलाको आँख्ली ठूलो भएको बीचको भाग) ले नै नाप्नु पर्दछ ।

**गोवालैः शणसंमिश्रैस्त्रिवृत्तममलात्मकम् ।**
**व्यामप्रमाणं नेत्रं स्यात् प्रमथ्यस्तेन पावकः ॥७॥**

सन मिसिएको गाईको रौंले तेबरपारी बाटिएको, स्वच्छ र चौबीस अङ्गुल नापोको नेत्र वा डोरी हुन्छ । त्यसैले अग्निमन्थन गरिन्छ ।

**मूर्द्धाक्षिकर्णवक्त्राणि कन्धरा चापि पञ्चमी ।**
**अङ्गुष्ठमात्राण्येतानि द्व्यङ्गुष्ठं वक्ष उच्यते ॥८॥**

अरणिको शिर, आँखा, कान, मुख र पाँचौं जिब्रो सबै एक-एक अङ्गुष्ठका हुन्छन् । छाती दुई अङ्गुष्ठको मात्र भनिएको छ ।

**अङ्गुष्ठमात्रं हृदयं त्र्यङ्गुष्ठमुदरं स्मृतम् ।**
**एकाङ्गुष्ठा कटिर्ज्ञेया द्वौ वस्ति द्वौ च गुह्यकम् ॥९॥**

हृदय एक अङ्गुष्ठ मात्रको, पेट तीन अङ्गुष्ठको मानिएको छ । कमर एक अङ्गुष्ठको, कमर दुइ अङ्गुष्ठको र नितम्ब दुई अङ्गुष्ठको हुन्छ ।

**ऊरु जंघे च पादौ च चतुस्त्र्येकैर्यथाक्रमम् ।**
**अरण्यवयवा ह्येते याज्ञिकैः परिकीर्तिताः ॥१०॥**

तिघ्रा, पिँडौला, गोडा क्रमशः चार, तीन र एक अङ्गुष्ठको हुन्छ । याज्ञिकले यहि नै अरणिका अङ्ग बताएका छन् ।

**यत्तद् गुह्यमिति प्रोक्तं देवयोनिस्तु सोच्यते ।**
**अस्यां यो जायते वह्निः स कल्याणकृदुच्यते ॥११॥**

जसलाई गुह्य भनिएको छ, त्यसलाई देवयोनि भनिन्छ । यसमा जुन अग्नि उत्पन्न हुन्छ त्यसलाई कल्याणदायी मानिएको छ ।

**अन्येषु ये तु मथ्नन्ति ते रोगभयमाप्नुयुः ।**
**प्रथमे मन्थने त्वेष नियमो नोत्तरेषु च ॥१२॥**

अन्य स्थानमा जो अग्नि मन्थन गर्दछन् ती रोग र भयले पिडित हुन्छन् । प्रथम मन्थनमा यो नियम छ त्यसपछिका मन्थनमा यस्तो नियम छैन ।

**उत्तरारणिनिष्पन्नः प्रमन्थः सर्वदा भवेत् ।**
**योनिसंकरदोषेण युज्यते ह्यन्यमन्थकृत् ॥१३॥**

माथिल्लो अरणिबाट गरिने मन्थन नै सधैं प्रमन्थ हुन्छ । तलको मन्थनबाट योनि संकर दोषयुक्त हुन्छ ।

**आर्द्रा सशुषिरा चैव घूर्णाङ्गी पाटिता तथा ।**
**न हिता यजमानानामरणिश्चोत्तरारणिः ॥१४॥**

गिलो, बीचमा खोक्रो, घुन लागेको र चिरिएको अरणि तथा उत्तरारणि जजमानको हितका लागि हुँदैन ।

॥ इति सप्तमः खण्डः ॥७॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको सातौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-८४+१४=९८
शुरुदेखिको श्लोलसङ्ख्या : ९८

**॥ अथाष्टमः खण्डः ॥**
**। अथ यज्ञस्रुवसमिधलक्षणवर्णनम् ।**
**(यज्ञका अन्य सामग्रीका लक्षण)**

**अरणीमन्थन विधि**

**परिधायाहतं वासः प्रावृत्य त यथाविधि ।**
**बिभृयात् प्राङ्मुखो यन्त्रमावृता वक्ष्यमाणया ॥१॥**

धोएका कपडा लगाई विधिपूर्वक यन्त्रलाई प्रदक्षिणा गरी पूर्वपट्टी फर्की निम्नानुसार यन्त्र समाउनू ।

**चात्रबुध्ने प्रमन्थाग्रं गाढं कृत्वा विचक्षणः ।**
**कृत्वोत्तराग्रामरणिं तद्बुध्नमुपरि न्यसेत् ॥२॥**

बुद्धिमानले चात्र र बुध्न (तल्लो भाग) लाई तथा प्रमन्थको माख्लो भागलाई बलियोसँग समाती अरणिको चेप्टो भागलाई माथि पारी बुध्नलाई त्यसमाथि राख्नू ।

**चक्राधः कीलकाग्रस्थामोविलीमुदगग्रकाम् ।**
**विष्टम्भाद्धारयेद्यन्त्रं निष्कम्पं प्रयतः शुचिः ॥३॥**

चात्रको तलतिरको टुप्पोमा अडिएको तथा माथितिर उठेको ओविलीलाई समातेर नहल्लिई जितेन्द्रीय र पवित्र जजमानले यन्त्र समातेन बस्नू ।

**त्रिरुद्वेष्ट्याथ नेत्रेण चक्रं पत्न्यो हतांशुकाः ।**
**पूर्वं मथ्नन्त्यरण्यान्त्याःप्राच्यग्नेःस्याद्यथा च्युतिः ॥४॥**

त्यसपछि नयाँ कपडा लगाएकी जजमानकी पत्नीले चात्रलाई नेतीले तीन फन्का बेरी जजमान भन्दा पूर्व बसी मथ्नु ता कि अग्निको उत्पत्ति पूर्व तिर होस् ।

**नैकयापि विना कार्य्यमाधानं भार्य्यया द्विजैः ।**
**अकृतं तद्विजानीयात् सर्व्वान्वाचारमन्ति यत् ॥५॥**

द्विजले एउटै पत्नी पनि साथमा नभए अग्न्याधान नगर्नू । गरेपनि नगरे सरह नै मानिन्छ किनकि तिनी (स्त्री) सबैलाई बोलीले वशमा पार्दछिन् ।

**वर्णज्यैष्ठ्येन वह्वीभिः सवर्णाभिश्च जन्मतः ।**
**कार्य्यमग्निच्युतेराभिः साध्वीभिर्मथनं पुनः ॥६॥**

धेरै पत्नी भए जेठो वर्णकी सँग, सबै समान वर्णका भए उमेरमा जेठीसँग अग्न्याधान गर्नू । अग्नि निभे पतिव्रता पत्नी मार्फत फेरी अग्नि मन्थन गर्नू ।

**नात्र शूद्रीं प्रयुञ्जीत न द्रोहद्वेषकारिणीम् ।**
**न चैवाव्रतस्थां नान्यपुंसा च सह सङ्गताम् ॥७॥**

अग्निमन्थनको यो कार्यमा शूद्रा पत्नीलाई सामेल नगराउनू । द्रोह र द्वेष गर्ने, व्रत पालना नगर्ने र परपुरुषसँग सहवास गर्ने (स्त्री) लाई अग्निमन्थनका कार्यमा साथमा नलिनू ।

**ततः शक्ततरा पश्चादासामन्यतरापि वा ।**
**उपेतानां वान्यतमा मन्थेदग्निं निकामतः ॥८॥**

त्यसपछि भने यीमध्ये बलिई वा जो कोही उपस्थित स्त्रीले इच्छानुसार अग्निमन्थन गर्नू ।

**यज्ञस्थलमा अग्नि जगाउने कार्य**

**जातस्य लक्षणं कृत्वा तं प्रणीय समिध्य च ।**
**आधाय समिधं चैव ब्राह्मणं चोपवेशयेत् ॥९॥**

जब अग्नि उत्पन्न हुन्छ तब जमिनमा रेखाले तिनको लक्षण बनाएर यज्ञशालामा लगी बाल्नू र त्यसमाथि समिधा हाली ब्राह्मणलाई त्यहाँ (समिपमा) बसाउनू ।

## होमका साधन

**ततः पूर्णाहुतिं हुत्वा सर्वमन्त्रसमन्विताम् ।**
**गां दद्याद्यज्ञवानन्ते ब्रह्मणे वाससी तथा ॥१०॥**

त्यसपछि सबै मन्त्रले पूर्णाहुति गरी जजमान ब्राह्मणलाई गाई र एक जोर वस्त्र दान गरोस् ।

**होमपात्रमनादेशे द्रवद्रव्ये स्रुवःस्मृतः ।**
**पाणिरेवेतरस्मिंस्तु स्रुचैवात्र तु हूयते ॥११॥**

होम के ले गर्ने भनी नखुलाइएको स्थानमा पग्लेका द्रव्यको हकमा स्रुवले र अरु कुराको हकमा हातले होम गर्ने भनी सम्झनू । यज्ञमा स्रुक् ले नै होम गरिन्छ ।
नोटः-यज्ञ गर्दा अग्निमा घिउ होम गर्ने साधन "स्रुक्" भन्दा बेग्लै किसिमको एक साधनलाई स्रुव भनिन्छ ।

**खादिरो वाथ पालाशो द्विवितस्तिः स्रुवः स्मृतः ।**
**स्रुग्बाहुमात्रा विज्ञेया वृत्तस्तु प्रग्रहस्तयोः ॥१२॥**

खयर वा पलाशले बनेको दुई बित्ता लामो स्रुव हुन्छ । स्रुक् एक हात लामो हुन्छ । दुवैको समाउने ठाउँ गोलो हुन्छ ।

**स्रुवाग्रे घ्राणवत् खातं द्वयङ्गुष्ठपरिमण्डलम् ।**
**जुह्वाः शराववत् खातं सनिर्व्वाहं षडङ्गुलम् ॥१३॥**

स्रुवको माथिल्लो भागमा नाकका प्वालसमान दुई अङ्गुलको घेरा भएको खोपिल्टो हुन्छ । जुहू (आहुति दिन बनाइएको पलाशको काठको सुरो) को खोपिल्टो माटाको घैंटो जस्तै आकारको छ अङ्गुलको हुन्छ ।

## होमका साधनको शुद्धि

**तेषां प्राक्शः कुशैः कार्य्यः संप्रमार्गो जुहूषता ।**
**प्रतापनञ्च लिप्तानां प्रक्षाल्योष्णेन वारिणा ॥१४॥**

होम गर्न चाहनेले पहिले बताइएको क्रमले जुहूलाई कुशले माझ्नु पर्दछ । घिउ आदि लागेको भए तातो पानीले धोएर तताउनु पर्दछ ।

## होमका सामग्रीको व्यवस्थापन

**प्राञ्चं प्राञ्चमुदगग्नेरुदगग्रं समीपतः ।**
**तत्तथाऽऽसादयेद् द्रव्यं यद्यथा विनियुज्यते ॥१५॥**

पूर्व-पूर्व द्रव्य (पहिले पहिले होम हाल्ने कुरा) लाई उत्तरतिर अग्निका नजिकै उत्तरपट्टि त्यसरी राख्नू जसरी त्यसको विनियोग गरिएको छ ।

### हव्य र देवता सम्बन्धी निर्णय

**आज्यं हव्यमनादेशे जुहोतिषु विधीयते ।**
**मन्त्रस्य देवतायाश्च प्रजापतिरिति स्थितिः ॥१६॥**

यज्ञ गर्ने समयमा द्रव्यको नाम उल्लेख नभए घिउ नै हव्य हुन्छ । मन्त्रको देवताको नाम उल्लेख नभए प्रजापति नै मन्त्रका देवता हुन्छन् । यस्तो नियम छ ।

### समिधाका नियम

**नाङ्गुष्ठादधिका ग्राह्या समित् स्थूलतया क्वचित् ।**
**न वियुक्ता त्वचा चैव न सकीटा न पाटिता ॥१७॥**

यज्ञमा कहिँ पनि बूढी औंलाभन्दा मोटा, बोक्रा नभएका, कीरा लागेका र चिरिएका समिधा प्रयोग नगर्नू ।

**प्रादेशान्नाधिका नोना तथा न स्याद्विशाखिका ।**
**न सपर्णा न निर्व्वीर्य्या होमेषु च विजानता ॥१८॥**

बुद्धिमानले एक कुरेत भन्दा लामा वा छोटा, हाँगा नभएका, पात सहितका र मक्किएका समिधा प्रयोग नगर्नू ।

**प्रादेशद्वयमिध्मस्य प्रमाणं परिकीर्तितम् ।**
**एवंविधाः स्युरेवेह समिधः सर्वकर्म्मसु ॥१९॥**

दाउराको नाप दुई कुरेत बताइएको छ । यज्ञकार्यका सबै क्रियामा समिधा यस्तै हुनुपर्दछ ।

**समिधोऽष्टादशेध्मस्य प्रवदन्ति मनीषिणः ।**
**दर्शे च पौर्णमासे च क्रियास्वन्यासु विंशतिः ॥२०॥**

विद्वानले औंसी र पूर्णिमाको यज्ञमा दाउराका अठार समिधा र अरु क्रियामा बीस समिधा बताउँदछन् ।

**समिदादिषु होमेषु मन्त्रदैवतवर्जिता ।**
**पुरस्ताच्चोपरिष्टाच्च हीन्धनार्थं समिद्भवेत् ॥२१॥**

समिधा आदि चाहिने होममा पहिले र अन्तिममा, दाउराका लागि देवता र मन्त्र रहित समिधा हुन्छ ।

**इध्मोऽप्येधार्थमाचार्यैर्हविराहुतिषु स्मृतः ।**
**यत्र चास्य निवृत्तिः स्यात्तत् स्पष्टीकरवाण्यहम् ॥२२॥**

आगो बाल्ने दाउरालाई आचार्यले आहुतीमा हविको रुपमा पनि मानेका छन् । जहाँ समिधा चल्दैन अब म त्यो कुरा स्पष्ट पार्दछु ।

**अङ्गहोमसमित्तन्त्रसोष्यन्त्याख्येषु कर्मसु ।**
**येषां चैतदुपर्य्युक्तं तेषु तत्सदृशेषु च ॥२३॥**
**अक्षभङ्गादिविपदि जलहोमादिकर्म्मणि ।**
**सोमाहुतिषु सर्व्वासु नैतेष्विध्म विधीयते ॥२४॥**

सहायक होम, युद्धतन्त्र, गर्भाधानादि कर्म, जसका सम्बन्धमा यो कुरो पहिल्यै बताइ सकिएको छ, त्यस्तै अरु कर्म, आँखा फुट्ने जस्ता विपत्ति, जलहोम आदि कर्म तथा सोम र अदितिका लागि गरिएका सबै क्रियामा दाउराको विधान छैन ।

॥ इति अष्टमः खण्डः ॥८॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको आठौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-९८+२४=१२२
शुरुदेखिको श्लोलसङ्ख्या : १२२



## ॥ अथ नवमः खण्डः ॥
## (नवौं खण्ड)

### । अथ सन्ध्याकालाद्युद्दिश्य कर्मणवर्णनम् ।
### (सन्ध्यादिकर्म)

### साँझबिहानको होम

**सूर्य्येऽस्तशैलमाप्राप्ते षट्त्रिंशद्भिः सदाङ्गुलैः ।**
**प्रादुष्करणमग्नीनां प्रातर्भासञ्च दर्शनात् ॥१॥**

साँझमा सधैं सूर्य अस्ताचलमा पुग्नु पूर्व छत्तीस अङ्गुल बाँकी छँदै र बिहान सूर्यकिरण देखिँदा अग्नि प्रज्वलित गर्नू ।

**हस्तादूर्ध्वं रविर्यावत् गिरिं हित्वा न गच्छति ।**
**तावद्धोमविधिः पुण्यो नात्येत्युदितहोमिनाम् ॥२॥**

जबसम्म सूर्य उदयाचललाई छोडी एक हात माथि जान्छन् तबसम्म प्रातःकालमा होम गर्नेको पवित्र होम-विधिको अतिक्रमण हुँदैन । (एक हात माथि आउँदासम्म उदयकाल नै हुन्छ) ।

**यावत् सम्यङ्न भाव्यन्ते नभस्यृक्षाणि सर्वतः ।**
**न च लौहित्यमापैति तावत् सायञ्च हूयते ॥३॥**

जबसम्म आकाशमा सबैतिर तारा राम्ररी देखिँदैनन् तथा आकाशमा लाली हट्दैन तबसम्म साँझको हवन गरिन्छ ।

**रजोनीहारधूमाभ्रवृक्षाग्रान्तरिते रवौ ।**
**सन्ध्यामुद्दिश्य जुहुयाद्धुतमस्य न लुप्यते ॥४॥**

सूर्य धूलो, धुवाँ, बादल वा वृक्षका टुप्पाले ढाकिएमा बिहानबेलुकी सन्ध्याको उद्देश्यले (सन्ध्या भयो भन्ने ठानी) होम गर्नू (यसरी होम गर्दा), उसले गरेको होम नष्ट हुँदैन ।

**न कुर्य्यात् क्षिप्रहोमेषु द्विजः परिसमूहनम् ।**
**वैरुपाक्षञ्च न जपेत् प्रपदञ्च विवर्जयेत् ॥५॥**

चाँडचाँडै गरिने होममा द्विजले कुशले वेदीको सरसफाई नगर्नू, वैरुपाक्ष र प्रपद[१] मन्त्र पनि छाड्नू ।
*(नोट-१. प्रपद : एउटा विशेष प्रकारको उच्चारणको नाम हो जसमा वैदिक मन्त्रको अर्थ र रचनामा ध्यान नदिइकन अक्षरलाई बराबर संख्यामा भाग लगाई भागै पिच्छे 'प्रपद्ये' शब्द जोडिन्छ ।) ।*

**पर्य्युक्षणञ्च सर्वत्र कर्त्तव्यमुदितेऽन्विति ।**
**अन्ते च वामदेवस्य गानं कुर्य्यादृचस्त्रिधा ॥६॥**

'आदितेऽनु...' आदि मन्त्रले सबैतिर कुशपानी छर्कनू र अन्तमा वामदेवको "ॐ कयानश्चित्र..." ऋचा तीन पटक गाउनू ।

**अहोमकेष्वपि भवेद्यथोक्तं चन्द्रदर्शनम् ।**
**वामदैव्यं गणेष्वन्ते बल्यन्ते वैश्वदेविके ॥७॥**

जुन पूर्णिमामा होम हुँदैन त्यसमा चन्द्रदर्शन जुन विधिले गरिन्छ त्यही विधिले सबै यज्ञको अन्तमा र बलिवैश्वदेवको अन्तमा वामदेव सूक्त (समवेदीय) मन्त्र जप हुन्छ ।

## परिधीको प्रयोग आदि

**यान्यधस्तरणान्तानि न तेषु स्तरणं भवेत् ।**
**एककार्य्यार्थसाध्यत्वात् परिधीनपि वर्जयेत् ॥८॥**

अधस्तरणको अन्तसम्मका कर्ममा स्मरण हुँदैन । पहिले नै कुश बिछ्याइएको ठाउँमा कुश बिछ्याइँदैन । एउटै कार्यको उद्देश्य साध्य हुनाले चारैतिर कुशले बनाइने परिधी पनि वर्जित छ ।

**बर्हिः पर्य्युक्षणं चैव वामदेव्यजपस्तथा ।**
**ऋत्वाहुतिषु सर्वासु त्रिकर्म तन्न विद्यते ॥९॥**

कुश बिछ्याउने, कुश-जल छर्कने र सोममन्त्रको जप गर्ने-यी तीन वटा कार्य सबै यज्ञका आहुतिमा हुँदैन ।

## होमिने वस्तु सम्बन्धी नियम

**हविष्येषु यवा मुख्यास्तदनु ब्रीहयः स्मृताः ।**
**माषकोद्रवगौरादि सर्व्वालाभेऽपि वर्जयेत् ॥१०॥**

होमिने वस्तुमा जौलाई र त्यसपछि धानलाई मुख्य मानिएको छ । सबै कुरा नपाइँदा पनि मास, कोदो, पहेँलो सर्सिउँ आदिको होम निषेध छ ।

## होम कसरी र कति हाल्ने ?

**पाण्याहुतिर्द्वादशपर्वपूरिका कंसादिना चेत् स्रुवमात्रपूरिका ।**
**दैवेन तीर्थेन च हूयते हविः स्वङ्गारिणि स्वर्च्चिषि तच्च पावके ॥११॥**

जुन आहुति हातले दिइन्छ त्यो चार औंलाका बाऱ्है पर्व (आँख्ली) भरी हुनेगरी दिनु पर्दछ । यदि काँस आदिका भाँडोले दिइन्छ भने स्रुवो भरी दिनु पर्दछ । हवि देवतीर्थले दिनु पर्दछ तथा उत्तम आगोमा वा उत्तम ज्वाला भएको अग्निमा पच्नेगरी (राम्ररी बल्ने गरी) दिइनु पर्दछ ।

**योऽनर्च्चिषि जुहोत्यग्नौ व्यङ्गारिणि मानवः ।**
**मन्दाग्निरामयावी च दरिद्रश्च स जायते ॥१२॥**

जसले ज्वाला नभएको र आगो नभएको अग्निमा होम गर्दछ त्यो मन्दाग्नि, रोगी र दरिद्र हुन्छ ।

**तस्मात् समिद्धे होतव्यं नामसिद्धे कदाचन ।**
**आरोग्यमिच्छतायुश्च श्रियमात्यन्तिकीम्पराम् ॥१३॥**

यसैले आरोग्य, दीर्घायु र अत्यधिक श्री चाहने मानिसले राम्ररी बलेको अग्निमा नै होम गर्नू, नबलेको अग्निमा कहिल्यै होम हाल्नु हुँदैन ।

### होमको आगो फुक्ने विधि

**होतव्ये च हुते चैव पाणिसूर्पस्फ्यदारुभिः ।**
**न कुर्य्यादग्निधमनं कुर्य्याद्वा व्यजनादिना ॥१४॥**

जुन अग्निमा होम गरिने हो वा जुन अग्निमा होम गरिएको हो त्यसलाई नाङ्लो, स्फ्य (यज्ञवेदीमा रेखा कोर्ने तरबारको आकारको काठको साधन) तथा दाउराले नहम्कनू । हम्किनै परे मयुर आदिको प्वाँखले बनाइएको पङ्खाले हम्कनू ।

**मुखेनैके धमन्त्यग्निं मुखाद्ध्येषोऽध्यजायत ।**
**नाग्निं मुखनेति च यल्लौकिके योजयन्ति तत् ॥१५॥**

(निम्न लाग्दा) कोही मुखले अग्नि फुक्दछन् । मुखबाटै अग्निको उत्पन्न भएकोले मुखले नफुक्नू । जहाँ हुने बताइएको छ त्यसलाई लौकिक अग्निसँग जोड्दछन् । (अन्तको आगो मुखले फुकेपनि यज्ञको आगो मुखले फुक्न हुन्न) ।

॥ इति नवमः खण्डः ॥९॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको नवौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-१२२+१५=१३७
शुरुदेखिको श्लोलसङ्ख्या : १३७



## ॥ अथ दशमः खण्डः ॥
## (दशौं खण्ड)

### । अथ प्रातकालिकस्नानादिक्रियावर्णनम् ।
### (बिहानका स्नान आदि कर्म)

### बिहानका नित्य कर्म

**यथाहनि तथा प्रातर्नित्यं स्नायादनातुरः ।**

**दन्तान् प्रक्षाल्य नद्यादौ गृहे चेत्तदमन्त्रवत् ॥१॥**

निरोगी मानिसले दिनमा नुहाए जसरी बिहान दाँत सफा गरी नदी आदिमा नित्य नुहाउनू । घरमा नुहाए मन्त्र नपढी नुहाउनू ।

**नारदाद्युक्तवार्क्षं यदष्टाङ्गुलमपाटितम् ।**
**सत्वचं दन्तकाष्ठं स्यात्तदग्रेण प्रधावयेत् ॥२॥**

जुन दतिवन नारदादि ऋषिले बताएको वृक्षको हुन्छ, त्यस्ता वृक्षको आठ अङ्गुलको, नचिरिएको र बोक्रा सहितको हुन्छ त्यसको टुप्पोले दाँतलाई राम्ररी सफा गर्नू ।

**उत्थाय नेत्रे प्रक्षाल्य शुचिर्भूत्वा समाहितः ।**
**परिजप्य च मन्त्रेण भक्षयेद्दन्तधावनम् ॥३॥**

उठेर आँखा धोई सावधानीपूर्वक शौचक्रिया सकेर (तलको) मन्त्र पढ्दै दतिवन चपाउनू ।

**आयुर्बलं यशो वर्द्धः प्रजाः पशून् वसूनि च ।**
**ब्रह्म प्रज्ञाञ्च मेधाञ्च त्वन्नो धेहि वनस्पते ॥४॥**

"हे वनस्पती ! तिमी हामीलाई आयु, बल, यश, तेज, उत्तम सन्तान, पशु, धन, वेद, बुद्धि र धारणा शक्ति देऊ" ।

## नदीमा नुहाउन निषेध गरिएको अवस्था

**मासद्वयं श्रावणादि सर्व्वा नद्यो रजस्वलाः ।**
**तासु स्नानं न कुर्व्वीत वर्जयित्वा समुद्रगाः ॥५॥**

साउन र भदौ महिनामा सबै नदीहरु रजस्वला हुन्छन् । यसबेला समुद्रसम्म पुग्ने नदीलाई छोडेर अरु नदीमा ननुहाउनू ।

## नदीको परिभाषा

**धनुःसहस्राण्यष्टौ तु गतिर्यासां न विद्यते ।**
**न ता नदीः शब्दवहा गर्त्तास्ताः परिकीर्तिताः ॥६॥**

जुन नदीको बहाई ८ हजार धनुष (१ धनुष=४ हात) सम्म हुँदैन त्यसलाई नदी भनिँदैन, खोल्सो भनिन्छ ।

## नदीमा नुहाउन हुने अवस्था

**उपाकर्म्मणि चोत्सर्गे प्रेतस्नाने तथैव च ।**
**चन्द्रसूर्य्यग्रहे चैव रजोदोषो न विद्यते ॥७॥**

उपाकर्म (वर्षाकाल पछि वेदाध्ययन शुरु गर्नु अघि गरिने कर्म), वेदाभ्यासको समापन कर्म, प्रेतस्नान र चन्द्रसूर्य ग्रहणमा नदीको यो रजोदोष हुँदैन (अर्थात् यी अवस्थामा साउन भदौमा पनि सामान्य नदीमा नुहाउन हुन्छ) ।

**वेदाश्छन्दांसि सर्व्वाणि ब्रह्माद्याश्च दिवौकसः ।**
**जलार्थिनोऽथ पितरो मरीच्याद्यास्तथर्षयः ॥८॥**
**उपाकर्मणि चोत्सर्गे स्नानार्थं ब्रह्मवादिनः ।**
**पिपासूननुगच्छन्ति सन्तुष्टाः स्वशरीरिणः ॥९॥**

वेद, सबै छन्द, ब्रह्मा आदि देवता, जल चाहने पितृहरु त्यस्तै प्रकारले मरीचि आदि ऋषिहरु प्रसन्न चित्तले आफ्नो शरीरका साथ, उपाकर्म र उत्सर्गमा स्नान गर्नका लागि जाँदै गरेका ब्रह्मवादीहरुको पछि पछि लाग्दछन् ।

**समागमस्तु यत्रैषां तत्र हत्यादयो मलाः ।**
**नूनं सर्व्वे क्षयं यान्ति किमुतैकं नदीरजः ॥१०॥**

जहाँ यिनको समागम हुन्छ त्यहाँ हत्या आदि दोष निश्चित रुपले सबैका सबै क्षीण हुन्छ, नदीको मैलो पानीमा (रजस्वला) नुहाएर हुने एउटा दोषको के कुरा ।

**ऋषीणां सिच्यमानानामन्तरालं समाश्रितः ।**
**संपिबेद्यः शरीरेण पर्षन्मुक्तजलच्छटाः ॥११॥**
**विद्यादीन् ब्राह्मणः कामान् वरादीन् कन्यका ध्रुवम् ।**
**आमुष्मिकान्यपि सुखान्याप्नुयात् स न संशयः ॥१२॥**

जलसेचन गरिरहेका ऋषिहरुका बीचमा रही भिज्दै तिनका शरीरबाट निक्लेको जललाई आफ्नो शरीरले पिउने ब्राह्मणले विद्या आदि मनोरथ तथा कन्याले निश्चितरुपले वर प्राप्त गर्दछे । यस्ताले पारलौकिक सुख पनि प्राप्त गर्दछन्, यसमा शङ्का छैन ।

### दानमा प्रयोग हुने अशुद्ध अन्न कसले खान्छ ?

**अशुच्यशुचिना दत्तमाममन्नं जलादिना ।**
**अनिर्गतदशाहास्तु प्रेता रक्षांसि भुञ्जने ॥१३॥**

अपवित्र र आशौची मानिसले दिएको अन्न, जल आदि (अशुद्ध हुने हुनाले) लाई मरेको दश दिन बिति नसकेका प्रेत र राक्षसले खान्छन् ।

### ग्रहणमा जलको शुद्धता

**स्वर्धुन्यम्भःसमानि स्युः सर्वाण्यम्भांसि भूतले ।**
**कूपस्थान्यपि सोमार्कग्रहणे नात्र संशयः ॥१४॥**

चन्द्र र सूर्य ग्रहणमा पृथ्वीमा रहेका सबै जल र कुवामा रहेको जल पनि नुहाउनका लागि गङ्गाजल समान हुन्छ, यसमा शङ्का छैन ।

॥ इति दशमः खण्डः ॥१०॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको दशौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-१३७+१४=१५१
शुरुदेखिको श्लोलसङ्ख्या : १५१



## ॥ अथैकादशः खण्डः ॥
## (एघारौं खण्ड)

### । अथ सन्ध्योपासनविधिवर्णनम् ।
### (सन्ध्योपासन विधि)

### सन्ध्याको महत्व र ब्राह्मण

**अत ऊद्ध्वं प्रवक्ष्यामि सन्ध्योपासनकं विधिम् ।**
**अनर्हः कर्मणां विप्रः सन्ध्याहीनो यतः स्मृतः ॥१॥**

यसपछि सन्ध्योपासनाको विधि बताउँदछु । सन्ध्या नगर्ने ब्राह्मण सबै कर्मका लागि अयोग्य मानिएका छन् ।

### कुश र बर्हिको परिभाषा तथ आचमनमा प्रयोग

**सव्ये पाणौ कुशान् कृत्वा कुर्यादाचमनक्रियाम् ।**
**ह्रस्वाः प्रचरणीयाः स्युः कुशा दीर्घास्तु बर्हिषः ॥२॥**

बायाँ हातमा कुश लिएर आचमन गर्नू । कार्यमा प्रयोग गर्नयोग्य छोटालाई 'कुश' र लामालाई 'बर्हि' भनिन्छ ।

## पवित्र र उपग्रह

**दर्भाः पवित्रमित्युक्तमतः सन्ध्यादिकर्मणि ।**
**सव्यः सोपग्रहः कार्यो दक्षिणः सपवित्रकः ॥३॥**

सन्ध्यादि कर्ममा कुशलाई 'पवित्र' भनिएको छ । बायाँ हात मुठी भरी कुश (उपग्रह) ले र दाहिने हात पवित्रले युक्त बनाउनू । (सामवेदीका हकमा नौ वटा र यजुर्वेदीको हकमा तीन वटा कुशको बाटिएको उपयमन कुशलाई उपग्रह भनिन्छ) ।

**रक्षयेद्वारिणात्मानं परिक्षिप्य समन्ततः ।**
**शिरसो मार्जनं कुर्यात् कुशैः सोदकबिन्दुभिः ॥४॥**

जल शरीरको सबैतिर छर्केर त्यसले आफ्नो रक्षा गर्नू । जलका थोपा भएका कुशले (गायत्री मन्त्रले मन्त्री) शिरमा छर्कनू ।

## मार्जन मन्त्र

**प्रणवो भूर्भुवःस्वश्च सावित्री च तृतीयका ।**
**अब्दैवत्यं त्र्यृचश्चैव चतुर्थमिति मार्जनम् ॥५॥**

ॐ, भूर्भुवः स्वः, तेश्रोमा गायत्री तथा चौथोमा जलदेवताको (आपो हिष्ठा आदि) तीन ऋचा मार्जन मन्त्र हुन् ।

## महाव्याहृति र शिरमन्त्र

**भूराद्यास्तिस्र एवैता महाव्याहृतयोऽव्ययाः ।**
**महर्जनस्तपः सत्यं गायत्री च शिरस्तथा ॥६॥**

भूः भुवः स्वः-यी तीन अव्यय (नष्ट नहुने) तीन महाव्याहृति हुन् । महः, जनः, तपः, सत्य र गायत्री तथा शिर र...।

**आपोज्योतीरसोमृतं ब्रह्मभूर्भुवः स्वरिति शिरः ।**
**प्रतिप्रतीकं प्रणवमुच्चारयेदन्ते च शिरसः ॥७॥**

'आपो ज्योती रसोऽमृतं ब्रह्म भूर्भुवः स्वः' यो शिर मन्त्र हो । प्रत्येक मन्त्रको अघिल्तिर र शिरको अन्तमा ॐ को उच्चारण गर्नू ।

**एता एतां सहानेन तथैभिर्दशभिः सह ।**
**त्रिर्जपेदायतप्राणः प्राणायामः स उच्यते ॥८॥**

सात व्याहृति (भू, भुवः, स्व, महः, जनः, तपः, सत्यम्), गायत्री (तत् सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात्), शिरमन्त्र र ॐ समेत-यी दश लाई सास रोकेर यदि तीन पटक जपिन्छ भने त्यसलाई एक प्राणायाम भनिन्छ ।

नोट :- "ॐ भूः ॐ भुवः ॐ स्वः ॐ महः ॐ जनः ॐ तपः ॐ सत्यम् ॐ तत्सवितुर्वरेण्यं भर्गो देवस्य धीमहि धियो यो नः प्रचोदयात् । ॐ आपो ज्योती रसोऽमृतं ब्रह्म भूर्भुवः स्वरोम्" यी मन्त्रलाई पवित्र र शुद्ध भई सास रोकेर तीन पटक जप्नु नै एक प्राणायाम हो । बिहान गरिने एक प्राणायाम मात्रले रातभरीका र साँझमा गरिने एक प्राणायाम मात्रले दिनभरीका पाप नष्ट हुन्छ । शुरुमा यति लामो मन्त्र सास रोकेर जप्न कठिन हुन्छ त्यसैले पहिले ॐ भुवः देखि ॐ सत्यम् सम्मको अभ्यास गर्नू । त्यसपछि त्यसमा विस्तारै गायत्री मन्त्र थप्ने अभ्यास गर्नू र अन्तमा सबै जप्ने अभ्यास गर्नू । जसरी संयमित भएर ठिक्क चलाउने इञ्जिन बढी टिक्दछ त्यसरी नै विधिपूर्वक सास रोक्ने अभ्यासबाट मानिसले दीर्घायु प्राप्त गर्दछ ।

## अघमर्षण

**करेणोद्धृत्य सलिलं घ्राणमासज्य तत्र च ।**
**जपेदनायतासुर्वा त्रिः सकृद्वाघमर्षणम् ॥९॥**

हातले जल उठाएर त्यसमा नाक लगाई प्राण रोकेर अथवा नरोकी तीन पटक वा एक पटक अघमर्षण ( ऋतं च सत्यं च आदि) मन्त्र जप गर्नू ।

## सूर्यलाई जलदान र प्रार्थना

**उत्थायार्कं प्रतिप्रोहेत्त्रिकेणाञ्जलिनामम्भसः ।**
**उच्चित्रमृग्द्वयेनाथ चोपतिष्ठेदनन्तरम् ॥१०॥**

(प्राणायाम वा अघमर्षण जपी) उठेर सूर्यलाई तीन अँजुली जल दिनू । त्यसपछि 'उदुत्यं जातवेद..' तथा 'देवानाम्...' यी दुई ऋचाले उनको स्तुति गर्नू ।

**सन्ध्याद्वयेऽप्युपस्थानमेतदाहुर्मनीषिणः ।**
**मध्ये त्वह्न उपर्यस्य विभ्राडादीच्छया जपेत् ॥११॥**

ज्ञानीहरु भन्दछन् कि दुवै सन्ध्यामा सूर्यको प्रार्थना-मन्त्र यही हो । मध्याह्नमा यसका साथमा 'विभ्राड..' आदि मन्त्र स्वेच्छाले जप्नू ।

**तदसंसक्तपार्ष्णिर्वा एकपादर्द्धपादपि ।**

**कुर्यात् कृताञ्जलिर्वापि उद्ध्र्वबाहुरथापि वा ॥१२॥**

सूर्यको यो स्तुतिलाई कुर्कुच्चा नटेकी, एउटा गोडामात्र वा आधा गोडा टेकेर हात जोडेर वा हात माथि उठाई गर्नू ।

**यत्र स्यात् कृच्छ्रभूयस्त्वं श्रेयसोऽपि मनीषिणः ।**
**भूयस्त्वं ब्रुवते तत्र कृच्छ्राच्छ्रेयो ह्यवाप्यते ॥१३॥**

जुन कार्यमा कष्ट धेरै हुन्छ ज्ञानीहरु त्यसैमा कल्याण पनि धेरै हुने बताउँदछन् किन कि कष्टले नै कल्याण प्राप्त हुन्छ ।

**सन्ध्यावन्दनको समय**

**तिष्ठेदुदयनात् पूर्वां मध्यमामपि शक्तितः ।**
**आसीन उद्गमाच्चान्त्यां सन्ध्यां पूर्वत्रिकं जपन् ॥१४॥**

प्रातःसन्ध्या सूर्योदयभन्दा अगाडि नै उभिएर, मध्याह्न-सन्ध्या शक्ति अनुसार उभिएर र साँझ-सन्ध्या तारा नउदाएसम्म बसी माथिका तीन मन्त्र जप्दै गर्नू ।

**एतत् सन्ध्यात्रयं प्रोक्तं ब्राह्मण्यं यत्र तिष्ठति ।**
**यस्य नास्त्यादरस्तत्र न स ब्राह्मण उच्यते ॥१५॥**

तीन सन्ध्यावन्दन बताइएको छ जसमा ब्राह्मणत्व रहन्छ, जसको यसमा आस्था छैन उसलाई ब्राह्मण भन्ने अधिकार पनि छैन ।

**सन्ध्यालोपाच्च चकितः स्नानशीलश्च यः सदा ।**
**तं दोषा नोपसर्पन्ति गरुत्मन्तमिवोरगाः ॥१६॥**

जसलाई सन्ध्या नगर्दा डर हुन्छ तथा जो सधैं नुहाउने स्वभावको छ त्यसका नजिकै दोष यसरी आउँदैन जसरी गरुडका नजिक सर्प ।

**वेदमादित आरभ्य शक्तितोऽहरहर्जपेत् ।**
**उपतिष्ठेत्ततो रुद्रं सर्वाद्वा वैदिकाज्जपात् ॥१७॥**

वेदलाई शुरुदेखि शुरु गरी शक्ति अनुसार प्रतिदिन पाठ गर्नू । त्यो वैदिक जप गर्नु अगाडि वा पछाडि रुद्रको स्तुति गर्नू ।

**॥ इति एकादशः खण्डः ॥११॥**

॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको एघारौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-१५१+१७=१६८
शुरुदेखिको श्लोलसङ्ख्या : १६८



## ॥ अथ द्वादशः खण्डः ॥
## (बाह्रौं खण्ड)

### । अथ तर्पणविधिवर्णनम् ।
### (तर्पणविधि)

**अथाद्भिस्तर्पयेद्देवान् सतिलाभिः पितृनपि ।**
**नमोऽन्ते तर्पयामीति आदावोमिति च ब्रुवन्॥१॥**

शुरुमा ॐ र अन्तमा 'ॐ नमः तर्पयामि' भन्दै जलले देवतालाई र तिलसहतिको जलले पितृलाई तर्पण गर्नू ।

**ब्रह्माणं विष्णुं रुद्रं प्रजापतिं वेदान् देवांश्छन्दांस्यृषीन् पुराणाचार्यान् गन्धर्वानितरान्मासं संवत्सरं सावयवं देवीरप्सरसो देवानुगान्नागान् सागरान् पर्वतान् सरितो दिव्यान् मनुष्यानितरान् मनुष्यान् यक्षान् रक्षांसि सुपर्णान् पिशाचान् पृथिवीमोषधीः पशून् वनस्पतीन् भूतग्रामं चतुर्विधमित्युपवीत्यथ प्राचीनावीती यमं यमपुरुषान् कव्यवाहमनलं सोमं यममर्य्यमणमग्निष्वात्तान् सोमपीथान् बर्हिषदोऽथ स्वान् पितृन् सकृत् सकृन्मातामहांश्चेति प्रतिपुरुषमभ्यस्येज्ज्येष्ठभ्रातृश्वशुरपितृव्यमातुलांश्च पितृवंशमातृवंशौ ये चान्ये मत्त उदकमर्हन्ति तांस्तयामीत्ययमवसानाञ्जलिरथ श्लोकाः ॥२॥**

ब्रह्मा, विष्णु, रुद्र, प्रजापति, वेद, देवता, छन्द, ऋषि, प्राचीन आचार्य, गन्धर्व, अन्य (यक्ष, किन्नर आदि), महिना, अवयव सहितका संवत्सर, देवी, अप्सरा, देवताका अनुगमनकर्ता, नाग, सागर, पर्वत, नदी, दिव्य मनुष्य, अन्य मनुष्य, यक्ष, राक्षस, गरुड, पिशाच, पृथिवी, औषधी, पशु, वनस्पति र चतुर्विध भूतग्रामलाई सव्य भएर तर्पण दिनू । त्यसपछि यम, यमपुरुष, कव्यवाह, अनल, सोम, यम, अर्यमा, अग्निष्वात्त, सोमपीथ, बर्हिलाई एक-एक पटक अपसव्य भएर तर्पण गर्नू । त्यसपछि आफ्ना पितृ र मातामहलाई एक-एक पटक अपसव्य भएर तर्पण गर्नू । प्रत्येक पुरुषलाई नाम लिएर बोलाउनू । जेठो दाजु, ससुरा, काका, मामा, पितृखलक, मातृखलक तथा अन्य जो मबाट जलको भाग पाउँदछन् ती सबैलाई म तर्पण गर्दछु । यो अन्तिम अँजुली हो । त्यसपछिको श्लोक तल उल्लेखित छ ।

**छायां यथेच्छेच्छरदातपार्त्तः परः पिपासुः क्षुधितोऽलमन्नम् ।**
**बालो जनित्रीं जननी च बालं योषित् पुमांसं पुरुषश्च योषाम्॥३॥**

**तथा सर्वाणि भूतानि स्थावराणि चराणि च ।**
**विप्रादुदकमिच्छन्ति सर्वाभ्युदयकृद्धि सः ॥४॥**

शरदकालको गर्मीले पिडित मानिस जसरी छहारीको चाहना गर्दछन् तथा जसरी तिर्खालुले पानीको, भोकाएकाले पर्याप्त अन्नको, बालकले आमाको, आमाले बालकको, स्त्रीले पुरुषको र पुरुषले स्त्रीको चाहना गर्दछन् त्यसै गरी स्थावर र जङ्गम सबै प्राणी ब्राह्मणबाट जलको चाहना गर्दछन् किन कि उ ती सबैको उत्थान गर्ने व्यक्ति हो ।

**तस्मात् सदैव कर्त्तव्यमकुर्वन्महतैनसा ।**
**युज्यते ब्राह्मणः कुर्वन्विश्वमेतद्बिभर्त्ति हि ॥५॥**

यसैले नित्य तर्पण गर्नु पर्दछ । तर्पण नगर्ने ब्राह्मण महापापले युक्त हुन्छ । तर्पण गर्दा ब्राह्मण पुण्यले युक्त हुन्छ र यो सारा संसारको भरण पोषण गर्दछ ।

**अल्पत्वाद्धोमकालस्य बहुत्वात् स्नानकर्मणः ।**
**प्रातर्न तनुयात् स्नानं होमलोपो हि गर्हितः ॥६॥**

होमको समय थोरै हुने गरी नुहाउन लामो समय नलगाउनू । यसो गरे होमको लोप हुन्छ र त्यो कार्य निन्दनीय हुन्छ ।

॥ इति द्वादशः खण्डः ॥१२॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको बाह्रौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-१६८+६=१७४
शुरुदेखिको श्लोलसङ्ख्या : १७४

## ॥ अथ त्रयोदशः खण्डः ॥
## (तेह्रौं खण्ड)

### । अथ पञ्चमहायज्ञविधिवर्णनम् ।
### (पञ्च महायज्ञको विधि)

**पञ्चानामथ सत्राणां महतामुच्यते विधिः ।**
**यैरिष्ट्वा सततं विप्रः प्राप्नुयात् सद्म शाश्वतम् ॥१॥**

अब पाँच महान यज्ञको विधि बताइन्छ, जसको निरन्तर यजन गर्नाले ब्राह्मण शाश्वत धाम प्राप्त गर्दछ ।

**देवभूतपितृब्रह्ममनुष्याणामनुक्रमात् ।**
**महासत्राणि जानीयात् त एवेह महामखाः ॥२॥**

देवयज्ञ, भूतयज्ञ, पितृयज्ञ, ब्रह्मयज्ञ र मनुष्ययज्ञ-यिनलाई क्रमशः महायज्ञ हुने भनी जान्नू । यी नै यसलोकमा महायज्ञ हुन् ।

**अध्यापनं ब्रह्मयज्ञः पितृयज्ञस्तु तर्पणम् ।**
**हौमो दैवो बलिर्भौतो नृयज्ञोऽतिथिपूजनम् ॥३॥**

अध्यापन ब्रह्मयज्ञ हो । तर्पण पितृयज्ञ हो । बलि दिनु भूतयज्ञ हो । अतिथिको सेवालाई मनुष्ययज्ञ भनिन्छ ।

**श्राद्धं वा पितृयज्ञः स्यात् पित्र्यो बलिरथापि वा ।**
**यश्च श्रुतिजपः प्रोक्तो ब्रह्मयज्ञः स वोच्यते ॥४॥**

श्राद्ध गर्नु वा पितृलाई बलि दिनु पितृयज्ञ हो । वेदको पाठ जुन बताइएको छ त्यसलाई ब्रह्मयज्ञ भनिन्छ ।

**स चार्वाक् तर्पणात् कार्यः पश्चाद्वा प्रातराहुतेः ।**
**वैश्वदेवावसाने वा नान्यत्रर्तौ निमित्तकात् ॥५॥**

यो कार्य तर्पण गर्नुअघि वा बिहान होम सकेर वा वैश्वदेव सकेर गरिनु पर्दछ । कुनै विशेष उद्देश्य नभई अरु समयमा नगर्नू ।

**अप्येकमाशयेद्विप्रं पितृयज्ञार्थसिद्धये ।**
**अदैवं नास्ति चेदन्यो भोक्ता भोज्यमथापि वा ॥६॥**

कसैकसैले यदि खाने व्यक्ति र खाने कुरा उपलब्ध छैन भने देवयज्ञ नगरीकन पनि पितृयज्ञको सिद्धिका लागि एउटा ब्राह्मणलाई भोजन गराउनु भनेका छन् ।

**अप्युद्धृत्य यथाशक्त्या किञ्चिदन्नं यथाविधि ।**
**पितृभ्योऽथ मनुष्येभ्यो दद्यादहरहर्द्विजे ॥७॥**

(यति गर्न पनि नसके) पितृ र मनुष्यका लागि शक्ति अनुसार केही अन्न निकालेर प्रतिदिन ब्राह्मणलाई दिने गर्नू ।

**पितृभ्य इदमित्युक्त्वा स्वधाकारमुदीरयेत् ।**
**हन्तकारं मनुष्येभ्यस्तदर्द्धे निनयेदपः ॥८॥**

पितृका लागि 'पितृभ्य इदम्' यस्तो भनी "स्वधा" शब्दको उच्चारण गर्नू । मनुष्यका लागि 'मनुष्येभ्य इदम्' भनी "हन्त" शब्दको उच्चारण गर्नू तथा यसका बीचमा जल दिनू ।

**मुनिभिर्द्विरशनमुक्तं विप्राणां मर्त्यवासिनां नित्यम् ।**
**अहनि च तथा तमस्विन्यां सार्द्धप्रथमयामान्ते ॥९॥**

मुनिहरुले पृथ्वीका ब्राह्मणहरुलाई दिन तथा रातमा, पहिलो साढे एक प्रहर बित्दासम्म नित्य दुई पटक भोजन गर्ने विधान बताएका छन् ।

**सायं प्रातर्वैश्वदेवः कर्त्तव्यो बलिकर्म च ।**
**अनश्नतापि सततमन्यथा किल्बिषी भवेत् ॥१०॥**

भोजन नगरे पनि बिहानबेलुकी निरन्तर वैश्वदेव यज्ञ र बलिकर्म गर्नु नत्र पाप लाग्दछ ।

**अमुष्मै नम इत्येवं बलिदानं विधीयते ।**
**बलिदानप्रदानार्थं नमस्कारः कृतो यतः ॥११॥**

अमुष्मै नमः (ब्रह्मणे नमः आदि) भनी बलि दिने विधान छ, किनकि बलि दिनका लागि नमस्कारको विधान गरिएको छ ।

**स्वाहाकारवषट्कारनमस्कारा दिवौकसाम् ।**
**स्वधाकारः पितृणाञ्च हन्तकारो नृणां कृतः ॥१२॥**

देवताका लागि स्वाहा, वषट् तथा नमः शब्दको, पितृका लागि स्वधा शब्दको र मनुष्यका लागि हन्त शब्दको प्रयोग गर्नुपर्ने विधान गरिएको छ ।

**स्वधाकारेण निनयेत् पित्र्यं बलिमतः सदा ।**
**तदध्येके नमस्कारं कुर्वते नेति गौतमः ॥१३॥**

यसैले स्वधा भनेर पितृलाई बलि दिनू, कोही यो नमस्कारको विधि बताउँछन् तर गौतमको यो मत छैन ।

**नावराद्धर्या बलयो भवन्ति महामार्गश्रवणप्रमाणात् ।**
**एकत्र चेदविकृष्टा भवन्तीतरेतरसंसक्ताश्च ॥१४॥**

आफ्नो सामर्थ्य अनुसार बलि दिनू । सनातन परम्पराको सुनिंदै आएको कुरा यसको प्रमाण हो । वाधा नभए तथा एकअर्कोमा सम्बन्धित भए बलि एउटै स्थानमा नै दिनु पर्दछ ।

**॥ इति त्रयोदशः खण्डः ॥१३॥**
**॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको तेह्रौं खण्डको नेपाली भावानुवाद सकियो ॥**



आदितः श्लोकानां समष्टयङ्काः-१७४+१४=१८८
शुरुदेखिको श्लोलसङ्ख्या : १८८



## ॥ अथ चतुर्दशः खण्डः ॥
## । अथ ब्रह्मयज्ञविधिवर्णनम् ।

नित्य बलिको विधि

**अतस्तद्विन्यासो वृद्धिपिण्डानिवोत्तरांश्चतुरो बलीन्निदध्यात् । पृथिव्यै वायसे विश्वेभ्यो देवेभ्यः प्रजापतय इति सव्यत एतेषमेकैकमद्भ्य ओषधिवनस्पतिभ्य आकाशाय कामायेत्येतषामपि मन्यव इन्द्राय वासुकये ब्रह्मण इत्येतेषामपि रक्षोजनेभ्य इति सर्वेषां दक्षिणतः पितृभ्य इति चतुर्द्दश नित्या आशस्यप्रभृतयः काम्याः सर्वेषामुभयतोऽद्भि : परिषेकः पिण्डवच्च पश्चिमा प्रतिपत्तिः ॥१॥**

बलिको विधान बताइन्छ-नान्दीमुखीका पिण्ड जस्तै ४ बलिलाई 'यो पृथिवीको लागि', 'यो वायुका लागि', 'यो विश्वेदेवाको लागि' र 'यो प्रजापतिको लागि' भन्दै उत्तरतिर राख्नू । यसको दक्षिणतिर एक-एक बलि जल, औषधि तथा वनस्पति र आकाश तथा कामका लागि, यसको दक्षिणतिर मन्यु, इन्द्र, वासुकि र ब्रह्माका लागि, यसको पनि दक्षिणतिर राक्षसजनका लागि र सबैभन्दा दक्षिणमा पितृका लागि बलि दिनू । आशस्य आदि चौध बलिहरु नित्य र कामनाका योग्य हुन्छन् । सबैको दुवैतिर जल सिञ्चन होस् । यसभन्दा पछिका कर्म पिण्डकर्म जस्तै हुन्छ ।

**न स्यातां काम्यसामान्ये जुहोतिबलिकर्मणी ।**
**पूर्वं  नित्यविशेषोक्तं जुहोतिबलिकर्मणोः ॥२॥**

होम र बलिकर्म सामान्य काम्य कर्म हुँदैनन्, किनकि होम र बलिकर्मलाई पहिले नै नित्य र विशेष कर्म भनी बताइ सकिएको छ ।

**काममन्ते भवेतायां न तु मध्ये कदाचन ।**
**नैकस्मिन् कर्मणि तते कर्मान्यदापतेद्यतः ॥३॥**

यी कर्म अन्तिममा गरिएता पनि, बीचमा कहिल्यै गरिँदैन किनकि एक कर्मको विस्तार हुँदा दोश्रो कर्मको विस्तार गर्रिदैन ।

**अग्न्यादिर्गौतमाद्युक्तो होमः शाकल एव च ।**
**अनाहिताग्नेरप्येष युज्यते बलिभिः सह ॥४॥**

गौतम आदिले बताएका अग्नि आदि कर्म तथा शाकलले बताएका होम-यी बलिसहित त्यस्ताले पनि गर्नयोग्य छन् जसले अग्निको आधान गरेको छैन (अविवाहित वा नित्य होम नगर्ने) ।

**स्पृष्ट्वापो वीक्षमाणोऽग्निं कृताञ्जलिपुटस्ततः ।**
**वामदेव्यजपात् पूर्वं प्रार्थयेद् द्रविणोदयम् ॥५॥**

होम र बलिपछि आचमन गरी अग्निलाई हेर्दै हात जोडेर वामदेव्य जपगरी धन (ऐश्वर्य)को वृद्धिको प्रार्थना गर्नू ।

## ब्रह्मयज्ञ

**आरोग्यमायुरैश्वर्य्यं धीर्धृतिः शं बलं यशः ।**
**ओजो वर्च्चः पशून् वीर्यं ब्रह्म ब्रह्मण्यमेव च ॥६॥**
**सौभाग्यं कर्मसिद्धिञ्च कुलज्यैष्ठ्यं सुकर्तुताम् ।**
**सर्वमेतत् सर्वसाक्षिन् द्रविणोद रिरीहि नः ॥७॥**

आरोग्य, आयु, ऐश्वर्य, धी, धृति, शान्ति, बल, यश, ओज, तेज, पशु, वीर्य, ज्ञान तथा ब्राह्मणत्व, सौभाग्य, कर्मसिद्धि, कुलको उत्तमता तथा शुभकर्म-यी सबैका सबै साक्षि भएका हे कुबेर ! हामी माग्नेलाई दिनुहोस् ।

**न ब्रह्मयज्ञादधिकोऽस्ति यज्ञो न तत्प्रदानात् परमस्ति दानम् ।**
**सर्वे तदन्ताः क्रतवः सदाना नान्तो दृष्टः कैश्चिदस्य द्विकस्य ॥८॥**

ब्रह्मयज्ञ भन्दा ठूलो अर्को यज्ञ छैन, वेददान भन्दा ठूलो अर्को दान छैन । दान समेत सबै यज्ञ यसैमा गएर अन्त हुन्छन् । कसैले पनि यी दुईको अन्त देखेका छैनन् ।

**ऋचः पठन् मधुपयः कुल्याभिस्तर्पयेत् सुरान् ।**
**घृतामृतौघकुल्याभिर्यजुंष्यपि पठन् सदा ॥९॥**

ऋचाहरु पढ्दै मह र दूधका धाराले देवतालाई तृप्त पार्नू । सधैं यजुमन्त्र पढ्दै घिउ र अमृत समूहका धाराले पनि देवतालाई तृप्त पार्नू ।

**सामान्यपि पठन् सोमघृतकुल्याभिरन्वहम् ।**
**मेदःकुल्याभिरपि च आथर्वाङ्गिरसः पठन् ॥१०॥**

प्रतिदिन साम मन्त्र पाठ गर्दै सोम र घिउको धाराले तथा अथर्व र अङ्गिरा ऋषिको मन्त्र पढ्दै बोसोको धाराले देवतालाई तृप्त गर्नू ।

**मांसक्षीरौदनमधुकुल्याभिस्तर्पयेत् पठन् ।**

**वाकोवाक्यं पुराणानि इतिहासानि चान्वहम्॥११॥**

वाक्योवाक्य, पुराण, महाभारत प्रतिदिन पढ्दै मासु, दूध, भात र महको धाराले देवतालाई तृप्त पार्नू ।

**ऋगादीनामन्यतममेतेषां शक्तितोऽन्वहम् ।**
**पठन् मध्वाज्यकुल्याभिः पितृनपि च तर्पयेत्॥१२॥**

यी ऋक् आदिमध्ये कुनै एक वेद यथाशक्ति प्रतिदिन पढ्दै मह र घिउका धाराले पितृलाई पनि तृप्त पार्नू ।

**ते तृप्तास्तर्पयन्त्येनं जीवन्तं प्रेतमेव च ।**
**कामचारी च भवति सर्वेषु सुरसद्मसु॥१३॥**

तृप्त भएका पितृले मानिसलाई जिवित वा मरणोपरान्त तृप्त गरिदिन्छन् । ती सबै देवलोकमा स्वेच्छाले घुम्ने हुन्छन् ।

**गुर्व्वप्येनो न तं स्पृशेत् पङ्क्तिश्चैव पुनाति सः ।**
**यं यं क्रतुञ्च पठति फलभाक्तस्य तस्य च॥१४॥**

ठूलोभन्दा ठूलो पापले पनि उसलाई छुँदैन । उ जुन पङ्क्तिमा बस्छ त्यसलाई पवित्र पारिदिन्छ । उसले जुनजुन यज्ञकर्मको पाठ गर्दछ त्यो त्यो फलको भागी हुन्छ ।

**वसुपूर्णा वसुमती त्रिर्दानफलमाप्नुयात् ।**
**ब्रह्मयज्ञादपि ब्रह्मदानमेवातिरिच्यते॥१५॥**

धनले भरिएको भूमि तीन पटक दान दिनाले पाइने फल वेदविद्याको दानले पाइन्छ । ब्रह्मदान ब्रह्मयज्ञ भन्दा पनि ठूलो हुन्छ ।

॥ इति चतुर्दशः खण्डः॥१४॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको चौधौं खण्डको नेपाली भावानुवाद सकियो॥



आदितः श्लोकानां समष्टयङ्काः-१८८+१५=२०३
शुरुदेखिको श्लोकसङ्ख्या : २०३



## ॥ अथ पञ्चदशः खण्डः॥
## (पन्ध्रौं खण्ड)

**अथ यज्ञविधिवर्णनम् ।**

## (यज्ञको विधि)

### दक्षिणा र पूर्णपात्र

**ब्रह्मणो दक्षिणा देया यत्र या परिकीर्तिता ।**
**कर्मान्तेऽनुच्यमानाऽपि पूर्णपात्रादिका भवेत् ॥१॥**

कर्म अनुसार तोकिएको दक्षिणा ब्रह्मालाई दिनू, नतोकिएका सबै कर्मको अन्तमा भाँडोभरी वा त्यस अनुरुप दक्षिणा (पूर्णपात्र) दिनू ।

**यावता बहुभोक्तुस्तु तृप्तिः पूर्णेन विद्यते ।**
**नावरार्द्ध्यमतः कुर्यात् पूर्णपात्रमिति स्थितिः ॥२॥**

जत्रो भरिएको भाँडोको अनाजले धेरै खाने व्यक्ति पनि अघाउँदछ, पूर्णपात्र त्यो भन्दा कम नगर्नू । यही नै विधान छ ।

**विदध्याद्धौत्रमन्यश्चेद्दक्षिणार्द्धहरो भवेत् ।**
**स्वयञ्चेदुभयं कुर्यादन्यस्मै प्रतिपादयेत् ॥३॥**

यदि ब्रह्मा र होता आधा-आधा दक्षिणा लिन्छन् भनी सोचिएको छ भने होताबाटै त्यो कर्म गराउनू । दुवै कर्म आफैंले गरे दक्षिणा अरु कसैलाई दिनू अर्थात् दक्षिणा अवस्य दिनू । आफूले नराख्नू ।

### दानका पात्र

**कुलर्त्विजमधीयानं सन्निकृष्टं तथा गुरुम् ।**
**नातिक्रामेत् सदा दित्सन् य इच्छेदात्मनो हितम् ॥४॥**

यदि आफ्नो हित चाहिएको छ भने दान दिँदा पढेलेखेको कुल-ऋत्विज तथा नजिकैका गुरुलाई नछाड्नू ।

**अहमस्मै ददामीति एवमाभाष्य दीयते ।**
**नैतावपृष्ट्वा ददतः पात्रेऽपि फलमस्ति हि ॥५॥**

'म इनलाई दिइरहेको छु' भनेर दान दिइन्छ । कुल पुरोहित र गुरुलाई नसोधी अरु कसैलाई दान दिनाले दानको फल पाइँदैन ।

**दूरस्थाभ्यामपि द्वाभ्यां प्रदाय मनसा वरम् ।**
**इतरेभ्यस्ततो देयादेष दानविधिः परः ॥६॥**

टाढा रहँदा पनि यी दुईलाई मनैले उत्तम वस्तु दान दिई (भाग छुटयाएर) त्यसपछि मात्र अरुलाई दान दिनू । यो नै दानको उत्तम विधि हो ।

**सन्निकृटमधीयानं ब्राह्मणं यो व्यतिक्रमेत् ।**
**यद्ददाति तमुल्लङ्घ्य ततः स्तेयेन युज्यते ॥७॥**

नजिकै रहेका पढेका ब्राह्मणलाई जो छाड्दछ र तिनलाई पर पारेर जे दान गर्दछ, उसले चोरी गरे सरह हुन्छ ।

**यस्य त्वेकगृहे मूर्खो दूरस्थश्च गुणान्वितः ।**
**गुणान्विताय दातव्यं नास्ति मूर्खे व्यतिक्रमः ॥८॥**

आफ्नै घरमा नपढेका ब्राह्मण छन् र पर गुणवान ब्राह्मण छन् भने त परका गुणवानलाई नै दान दिनू, यसो गर्दा नजिककालाई नटेरेको मानिंदैन ।

**ब्राह्मणाभिक्रमो नास्ति विप्रे वेदविवर्जिते ।**
**ज्वलन्तमग्निमुत्सृज्य न हि भस्मनि हूयते ॥९॥**

वेद नपढेका ब्राह्मणलाई छाडी ज्ञानी ब्राह्मणलाई दान दिँदा ब्राह्मणलाई नटेरेको हुँदैन किनकि बलिरहेको अग्निलाई छोडेर खरानीमा होम गरिँदैन ।

## आज्यस्थाली

**आज्यस्थाली च कर्तव्या तैजसद्रव्यसम्भवा ।**
**महीमयी वा कर्तव्या सर्वास्वाज्याहुतीषु च ॥१०॥**

घिउको सबै थरी आहुति दिन उज्यालो पदार्थ (सुन) वा माटोले बनेको आज्यस्थालीको प्रयोग गर्नू ।

**आज्यस्थाल्याः प्रमाणं तु यथाकामन्तु कारयेत् ।**
**सुदृढामव्रणां भद्रामाज्यस्थालीं प्रचक्षते ॥११॥**

आज्यस्थालीको आकार इच्छा अनुसार बनाए हुन्छ । विद्वानहरु बलियो, प्वाल नपरेको र सुन्दर आज्यस्थालीलाई नै आज्यस्थाली भन्दछन् ।

## चरुस्थाली

**तिर्यगूर्द्ध्वं समिन्मात्रा दृढा नातिबृहन्मुखी ।**
**मृन्मय्यौदुम्बरी वाऽपि चरुस्थाली प्रशस्यते ॥१२॥**

तेर्सो र अग्लो, समिधाको नापोको, बलियो, धेरै ठूलो मुख नभएको तथा माटो या डुम्रीका काठको चरुस्थाली उत्तम हुन्छ ।

## चरु

**स्वशाखोक्तः प्रसुस्विन्नो ह्यदग्धोऽकठिनः शुभः ।**
**न चातिशिथिलः पाच्यो न चरुश्चारसस्तथा ॥१३॥**

आफ्नो शाखा (गृह्यसूत्र) मा बताइए बमोजिम, राम्ररी पकाइएको, नडढेको, कोमल, सुन्दर तथा न धेरै गिलो न सुक्खा चरु पकाउनू (बनाउनू) ।

## मेक्षण

**इध्मजातीयमिध्मार्द्धप्रमाणं मेक्षणं भवेत् ।**
**वृत्तं चाङ्गुष्ठपृथ्वग्रमवदानक्रियाक्षमम् ॥१४॥**

समिधाका जातको, समिधाको आधा नापोको, गोलो, अगिल्लो भाग बुढीऔंला जति मोटो भएको मेक्षण (यज्ञमा चरु होम्न प्रयोग गरिने चम्चा वा दाबिलो जस्तो एक साधन) हुन्छ ।

## दर्वी

**एषैव दर्वी यस्तत्र विशेषस्तमहं ब्रुवे ।**
**दर्वीद्वयङ्गुलपृथ्वग्रा तुरीयोनं तु मेक्षणम् ॥१५॥**

यही दर्वी हुन्छ । यसको विशेषता बताउँदछु-दर्वीको अगिल्लो भाग दुई अङ्गुल र मेक्षणको अगिल्लो भाग सोको एक चौथाई मोटो हुन्छ ।

## मुसल, ओखल र नाङ्लो

**मुसलोलूखले वार्क्षे स्वायत्ते सुदृढे तथा ।**
**इच्छाप्रमाणे भवतः शूर्पं वैणवमेव च ॥१६॥**

मूसल र ओखल काठले बनेको, फराकिलो, बलियो तथा चाहे अनुसारको नापोको हुन्छ । नाङ्लो बाँसकै हुन्छ ।

## कर्मगर्दा हात राख्ने तरिका

**दक्षिणं वामतो बाह्यमात्माभिमुखमेव च ।**
**करं करस्य कुर्वीत करणेऽन्यद्ध कर्मणः ॥१७॥**

दाहिने हातलाई बायाँ हातभन्दा बाहिर पट्टि र आफूसामु राख्नू । अरु कर्म गर्दापनि यसै गर्नू ।

### अग्निकण जम्मा पार्ने काम

**कृत्वाग्न्यभिमुखौ पाणी स्वस्थानस्थौ सुसंयतौ ।**
**प्रदक्षिणं तथासीनः कुर्यात् परिसमूहनम् ॥१८॥**

आफ्नो स्थानमा रहेर, राम्ररी संयमित दुवै हात अग्निका सामु लगी दाहिनेतिर त्यसै गरी बसेर अग्नि-कण एकत्र गर्नू ।

### परिधी

**बाहुमात्राः परिधयः ऋजवः सत्वचोऽव्रणाः ।**
**त्रयो भवन्ति शीर्णाग्रा एकेषान्तु चतुर्दिशम् ॥१९॥**

एक हातका, सोझा, बोक्रो सहितका, घुन नलागेका, अगिल्तिर फाटेका तीन वटा परिधी हुन्छ । कसैको मतमा चार दिशामा चार वटा हुन्छन् ।

**प्रागग्रावलिभिः पश्चादुदग्रमथवापरम् ।**
**न्यसेत् परिधिमन्यश्चेदुदगग्रः स पूर्वतः ॥२०॥**

दुईतिर दुई परिधिको टुप्पो पूर्व र पश्चिमतिर राखे टुप्पो उत्तरतिर होस् । यदि अन्य परिधि राखे टुप्पो उत्तरतिरै होस् र त्यसलाई पूर्वबाट क्रमशः राखियोस् ।

### होम गर्ने अन्न आदि

**यथोक्तवस्त्वसम्पत्तौ ग्राह्यं तदनुकारि यत् ।**
**यवानामिव गोधूमा व्रीहीणामिव शालयः ॥२१॥**

बताइएको वस्तु नपाइए, त्यस्तै किसिमको वस्तु लिनू । जस्तै-जौ जस्तै गहुँ हुन्छ र व्रीहिधान जस्तै शालि धान हुन्छ ।

॥ इति पञ्चदशः खण्डः ॥१५॥

॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको पन्ध्रौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-२०३+२१=२२४
शुरुदेखिको श्लोकसङ्ख्या : २२४

## ॥ अथ षोडशः खण्डः ॥
## (सोह्रौं खण्ड)

### । अथ श्राद्धतिथिविशेषेण विधिवर्णनम् ।

### श्राद्धमा तिथि र समय निर्णय

**पिण्डान्वाहार्यकं श्राद्धं क्षीणे राजनि शस्यते ।**
**वासरस्य तृतीयांशे नातिसन्ध्यासमीपतः ॥१॥**

पिण्डान्वाहार्यक श्राद्ध चन्द्रमा क्षीण हुँदा (औंसीमा), दिनको तेश्रो प्रहरमा वा साँझ पर्नुभन्दा केही अगाडि गर्नु उत्तम हुन्छ ।
पिण्डान्वाहार्यकम् :-पितृका लागि दिइने भोजन वा पिण्ड, जुन श्राद्धमा पछि पिण्डदान गरिन्छ त्यसमा गरिने पिण्डको निष्पत्ति वा समाप्ति ।

**यदा चतुर्दशी यामं तुरीयमनुपूरयेत् ।**
**अमावस्या क्षीयमाणा तदैव श्राद्धमिष्यते ॥२॥**

चतुर्दशी दिनको एक प्रहरसम्म भए तथा औंसी नभए सोही बेला श्राद्ध गर्नु पर्दछ ।

**यदुक्तं यदहस्त्वेव दर्शनं नैति चन्द्रमाः ।**
**अनयापेक्षया ज्ञेयं क्षीणे राजनि चेत्यपि ॥३॥**

भनिएको छ कि जुन दिन चन्द्रमाको दर्शन हुँदैन त्यसै दिन श्राद्ध गर्नू । यसले गर्दा औंसीको सट्टा चतुर्दशीमा चन्द्रमा क्षीण हुँदा पनि श्राद्ध गर्नु : यस्तो बुझिन्छ ।

**यच्चोक्तं दृश्यमानेऽपि तच्चतुर्दश्यपेक्षया ।**
**अमावास्यां प्रतीक्षेत तदन्ते वापि निर्वपेत् ॥४॥**

अनि चन्द्रमा देखिएमा श्राद्ध गर्नू भनी चतुर्दशीको लागि भनिएको हो । अन्यथा औंसीको प्रतिक्षा गर्नू वा चतुर्दशीको अन्तमा पिण्ड दिनू ।

**अष्टमेंऽशे चतुर्दश्याः क्षीणो भवति चन्द्रमाः ।**
**अमावास्याष्टमांशे च पुनः किल भवेदणुः ॥५॥**

चतुर्दशीको आठौं अंशमा चन्द्रमा क्षय हुन्छन् र औंसीको आठौं अंशमा ती फेरी सूक्ष्म रुपमा हुन्छन् ।

**अग्रहायण्यमावास्या तथा ज्येष्ठस्य या भवेत् ।**
**विशेषमाभ्यां ब्रुवते चन्द्रचारविदो जनाः ॥६॥**

मंसिर वा जेठको औंसी जुन हुन्छन्, चन्द्रमाको गति जान्नेहरु तिनको विषयमा विशेष केही कुरा बताउँदछन् ।

**अत्रेन्दुराद्ये प्रहरेवतिष्ठते चतुर्थभागे न कलावशिष्टः ।**
**तदन्त एव क्षयमेति कृत्स्नमेवं ज्योतिश्चक्रविदो वदन्ति ॥७॥**

यी तिथिमा चन्द्रमा पहिलो प्रहरमा रहन्छन् । दिनको चौथो भागमा चन्द्रमाको कुनै कला बाँकी रहँदैन । अन्तिम भागमा पूर्ण क्षय हुन्छन्, यस्तो ज्योतिषहरु बताउँदछन् ।

**यस्मिन्नब्दे द्वादशैकश्च यव्यस्तस्मिंस्तृतीयया परिदृश्यो नोपजायते ।**
**एवं चारं चन्द्रमसो विदित्वा क्षीणे तस्मिन्नपराह्णे च दद्यात् ॥८॥**

जुन साल तेह्र महिनाको हुन्छ, त्यो वर्ष तेश्रो प्रहरपछि चतुर्दशीका चन्द्रमा देखिँदैनन् ।  यसरी चन्द्रमाको गतिलाई हेरेर क्षय भएपछि अपराह्णमा पिण्ड दिनू ।

**सम्मिश्रा च चतुर्दश्या अमावास्या भवेत् क्वचित् ।**
**खर्वितां तां विदुः केचित् गताध्वामिति चापरे ॥९॥**

औंसी केही गरी चतुर्दशीमा खप्टिए यजुर्वेदीहरु खर्विता (हीन) र ऋग्वेदी गताध्वा (उत्तम) भन्दछन् ।

**वर्द्धमानाममावास्यां लभच्चेदपरेऽहनि ।**
**यामांस्त्रीनधिकान् वापि पितृयज्ञस्ततो भवेत् ॥१०॥**

यदि अघिल्लो दिन तीन प्रहर वा त्योभन्दा पनि बढी समयसम्म औंसी भए त त्यसै दिन श्राद्ध हुन सक्दछ ।

**पक्षादावेव कुर्व्वीत सदा पक्षादिकं चरुम् ।**
**पूर्वाह्ण एव कुर्व्वन्ति विद्धेऽप्यन्ये मनीषिणः ॥११॥**

पक्षको चरु पक्षको शुरुमै बनाउनू । यस्तो चरु पूर्वाह्णमा नै बनाउँछन् । कसैको अर्को दिन बनाउने भन्ने मत देखिन्छ ।

## श्राद्ध गर्ने अधिकार

**सपितुः पितृकृत्येषु ह्यधिकारो न विद्यते ।**
**न जीवन्तमतिक्रम्य किञ्चिद्दद्यादिति श्रुतिः ॥१२॥**

बाबुले गर्ने पितृकर्ममा छोरो अधिकारी हुँदैन (बाबु छँदै पितृश्राद्ध गर्न सक्दैन) । जिउँदो पितालाई नाघी श्राद्ध दिनु हुन्न भन्ने वेद वचन छ ।

**पितामहे ध्रियते च पितुः प्रेतस्य निर्वपेत् ।**
**पितुस्तस्य च वृत्तस्य जीवेच्चेत् प्रपितामहः ॥१३॥**

हजूरबाबु जिउँदै हुनेले केवल मरेका बाउको श्राद्ध गर्नू । यदि बाजे जिउँदै छन् भने पनि हजूरबाको पनि श्राद्ध गर्नू ।

**पितुः पितुः पितुश्चैव तस्यापि पितुरेव च ।**
**कुर्य्यात् पिण्डत्रयं यस्य संस्थितः प्रपितामहः ॥१४॥**

जसका कुप्रा बाजे जिँउदै छन् उसले बाउ, हजूरबाउ र बाजे तीन लाई तीन पिण्ड दिनू ।

**जीवन्तमति दद्याद्वा प्रतायान्नोदके द्विजः ।**
**पितुः पितृभ्यो वा दद्यात् स्वपितेत्यपरां श्रुतिः ॥१५॥**

ब्राह्मणले जीवित बाउको अतिक्रमण गरी मृतकलाई अन्न र जल दिउन् वा बाउले आफ्ना पितृलाई दिउन् यस्तो अन्य श्रुतिको विचार छ ।

**पितामहः पितुः पश्चात् पञ्चत्वं यदि गच्छति ।**
**पौत्रेणैकादशाहादि कर्त्तव्यं श्राद्धषोडशम् ॥१६॥**

यदि हजुरबूबा बूबाभन्दा पछि स्वर्गे हुन्छन् भने त नातीले एघारौं आदि सोह्र श्राद्ध गर्नु पर्दछ ।

**नैतत् पौत्रेण कर्त्तव्यं पुत्रवांश्चेत् पितामहः ।**
**पितुः सपिण्डनं कृत्वा कुर्य्यान्मासानुमासिकम् ॥१७॥**

यदि हजुरबूबाका अरु कुनै छोरा छन् भने नातीले यो कर्म गर्नु हुँदैन । छैनन् भने बाबुको सपिण्डी गरेर मासिक श्राद्ध गर्नू ।

**असंस्कृतौ न संस्कार्यौ पूर्व्वौ पौत्रप्रपौत्रकैः ।**
**पितरं तत्र संस्कुर्य्यादिति कात्यायनोऽब्रवीत् ॥१८॥**

नाती तथा पनातीद्वारा संस्कार नभएका हजूरबाबु र बाजेको अन्तिम संस्कार गर्नु हुँदैन । छोराले केवल बाबुको संस्कार गर्नू । यस्तो कात्यायनको विचार छ ।

**पापिष्ठमपि शुद्धेन शुद्धं पापकृतानि वा ।**
**पितामहेन पितरं संस्कुर्य्यादिति निश्चयः ॥१९॥**

पापी बाबुको पनि शुद्ध हजूरबाका साथमा र शुद्ध बाबुको पापी हजूरबाका साथमा संस्कार गर्नू । स्मृतिहरुको यहि निर्णय छ ।

**ब्राह्मणादिहते ताते पतिते सङ्गवर्जिते ।**
**व्युत्क्रमाच्च मृते देयं येभ्य एव ददात्यसौ ॥२०॥**

ब्राह्मणादिबाट मारिएको, पतित, सत्सङ्गहीन वा फाँसी आदिले मरेको बाबुलाई पनि पिण्ड दिनू र जजसलाई बाबुले पिण्ड दिन्थे तिनलाई पनि दिनू ।

## सपिण्डीकरण

**मातुः सपिण्डीकरणं पितामह्या सहोदितम् ।**
**यथोक्तेनैव कल्पेन पुत्रिकया न चेत् सुतः ॥२१॥**

आमाको सपिण्डीकरण हजूरआमासँग गर्ने बताइन्छ । पुत्रिका पुत्र बनाइएको छैन भने जसरी शास्त्रीय विधान छ त्यसै गरी गर्नू ।

## वार्षिक श्राद्ध बाहेकका श्राद्धमा स्त्रीलाई पिण्डदान दिने विधि

**न योषिद्भ्यः पृथग् दद्यादवसानदिनादृते ।**
**स्वभर्तृपिण्डमात्राभ्यस्तृप्तिरासां यतः स्मृता ॥२२॥**

मरेको दिनलाई छोडी अरु दिन स्त्रीहरुलाई अलग पिण्ड नदिनू । किनकि इनको तृप्ति आफ्ना पतिको पिण्डको अंशले हुने बताइएको छ ।

## पुत्रिका पुत्र र पिण्डदान

**मातुः प्रथमतः पिण्डं निर्व्वपेत् पुत्रिकासुतः ।**
**द्वितीयन्तु पितुस्तस्यास्तृतीयन्तु पितुः पितुः ॥२३॥**

पुत्रिकाबाट जन्मेको छोरोले पहिलो पिण्ड आमालाई, दोश्रो आमाका बाबुलाई र तेश्रो आमाका हजूरबाबुलाई दिनू ।

*नोट : पुत्रिका पुत्र-तिमीहरुबाट जन्मिएको पहिलो छोरो मेरो हुन्छ भनी वचन हाली गरिएको कन्यादान पछि छोरीबाट जन्मिएको पहिलो छोरो ।*

॥ इति षोडशः खण्डः ॥१६॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको सोह्रौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-२२४+२३=२४७
शुरुदेखिको श्लोकसङ्ख्या : २४७



## ॥ अथ सप्तदशः खण्डः ॥
## (सत्रौं खण्ड)

## । अथ श्राद्धवर्णनम् ।
## (श्राद्ध विधि)

### कर्षू

**पुरतो नात्मनः कर्षू सा पूर्व्वा परिकीर्त्यते ।**
**मध्यमा दक्षिणेनास्यास्तद्दक्षिणत दुत्तमा ॥१॥**

श्राद्धमा जुन कर्षू बनाइन्छ त्यसमध्ये आफूतिरको पहिलो कर्षूलाई पूर्वा (प्रथमा), त्यसको दक्षिण तिरकोलाई मध्यमा र त्यसको पनि दक्षिणकोलाई उत्तमा (अन्तिमा) भनिन्छ ।
*नोटः- श्राद्धमा पिण्डदान दिन भुइँमा बालुवा ओछ्याएपछि कुशले त्यसमाथि बनाइने कुलेसोलाई कर्षू भनिन्छ ।*

**वाय्वग्निदिङ्मुखान्तास्ताः काय्र्याः सार्द्धाङ्गुलान्तराः ।**
**तीक्ष्णान्ता यवमध्याश्च मध्यं नाव इवोत्किरेत् ॥२॥**

कर्षूको शुरुवात उत्तरपश्चिम (वायव्य) र अन्त दक्षिणपूर्व (आग्नेय) तिर हुनेगरी कोर्नु वा बनाउनु पर्दछ । यिनको फरक डेढ अङ्गुल हुनु पर्दछ । यस्ता कर्षूको आकार टुप्पोमा चुच्चो परेको, बिचको भाग जौजस्तै फुकेको व डुङ्गाको आकारको हुनु पर्दछ ।

### शङ्कु

**शङ्कुश्च खादिरः काय्र्यो रजतेन विभूषितः ।**
**शङ्कुश्चैवोपवेशुश्च द्वादशाङ्गुल इष्यते ॥३॥**

शङ्कु (किलो) खयरको काठको र चाँदीले मोरेको बनाउनू । शङ्कु र उपवेश (पितृको आसन) बाह्र-बाह्र अङ्गुलको हुनु पर्दछ ।

## कर्षूमा कुश स्थापन

**अग्न्याशाग्रैः कुशैः कार्य्यं कर्षूणां स्तरणं घनैः ।**
**दक्षिणान्तं तदग्रैस्तु पितृयज्ञे परिस्तरेत् ॥४॥**

दक्षिण-पूर्वतिर टुप्पो फर्काइएका बाक्ला कुश कर्षूमा बिछ्याउनू । पितृश्राद्धमा दक्षिणी छेउमा त्यतैपट्टि फर्केका कुश बिछ्याउनू ।

## सौवीराञ्जन

**स्थगरं सुरभिर्ज्ञेयं चन्दनादि विलेपनम् ।**
**सौवीराञ्जनमित्युक्तं पिञ्जलीनां यदञ्जनम् ॥५॥**

सुपारी, गन्धक आदि सुगन्ध, चन्दन आदि विलेपन र पिञ्जली (कुशका गुच्छा) लाई कुटेर तयार पारिएको धूलोलाई सौवीराञ्जन भनिएको छ ।

## श्राद्धमा हतार नगर्नू

**स्वस्तरे सर्व्वमासाद्य यथावदुपयुज्यते ।**
**देवपूर्वं ततः श्राद्धमत्वरः शुचिरारभेत् ॥६॥**

राम्रा आसनमा सबै कुरा राखेर तिनको यथोचित उपयोग गरिन्छ । पवित्र भई, देवपूजा गरेपछि नहतारिइकन श्राद्ध गर्न शुरु गर्नू ।

## तर्पण

**आसनाद्यर्घपर्य्यन्तं वसिष्ठेन यथेरितम् ।**
**कृत्वा कर्म्माथ पात्रेषु उक्तं दद्यात् तिलोदकम् ॥७॥**

(श्राद्धमा) बस्नेदेखि अर्घ दिने सम्मका काम वसिष्ठ ऋषिले बताए अनुसार गरी त्यसपछि पात्रमा तिलोदक (तर्पण) दिनू ।

**तूष्णीं पृथगपो दत्त्वा मन्त्रेण तु तिलोदकम् ।**
**गन्धोदकञ्च दातव्यं सन्निकर्षक्रमेण तु ॥८॥**

मनमनै मन्त्र पढ्दै बेग्ला बेग्लै तिलोदक दिनू । त्यसपछि निकटताको क्रमअनुसार गन्धोदक दिनू ।

## तर्पण दिने भाँडा

**आसुरेण तु पात्रेण यस्तु दद्यात्तिलोदकम् ।**
**पितरस्तस्य नाश्नन्ति दश वर्षाणि पञ्च च ॥९॥**

जसले आसुर-भाँडोले तिलोदक दिन्छ त्यसका पितृले पन्ध्र वर्षसम्म उसले दिएको श्राद्ध खाँदैनन् ।

## आसुर भाँडा

**कुलालचक्रनिष्पन्नमासुरं मृण्मयं स्मृतम् ।**
**तदेव हस्तघटितं स्थाल्यादि दैविकं भवेत् ॥१०॥**

कुम्हालेको चक्रमा बनाइएको माटोको भाँडोलाई आसुर-भाँडो मानिन्छ । यिनै थाली आदि भाँडाहरु यदि हातले बनाइएको छ भने फेरी त्यो देव-भाँडो हुन्छ ।

## श्राद्धमा फूल, धूप र होम

**गन्धान् ब्राह्मणसात् कृत्वा पुष्पाण्यृतुभवानि च ।**
**धूपञ्चैवानुपूर्वेण ह्यग्नौ कुर्य्यादनन्तरम् ॥११॥**

गन्ध, ऋतु अनुसारका फूल र धूप क्रमैले ब्राह्मणहरुलाई अर्पण गरेर त्यसपछि अग्निमा होम (अग्नौकरण) गर्नू ।

**अग्नौकरणहोमश्च कर्त्तव्य उपवीतिना ।**
**प्राङ्मुखेनैव देवेभ्यो जुहोतीति श्रुतिश्रुतेः ॥१२॥**

अग्नौकरण होम उपवीती भएर गर्नु पर्दछ । पूर्वतिर मुख फर्काएर देवातालाई आहुति दिइन्छ । यस्तो श्रुति सुनिएको छ ।

**अपसव्येन वा कार्य्यो दक्षिणाभिमुखेन च ।**
**निरुप्य हविरन्यस्मा अन्यस्मै न हि हूयते ॥१३॥**

अथवा अपसव्य भएर दक्षिणतिर फर्की होम गर्नु पर्दछ । एउटालाई अठोट गरिएको हवि अरुलाई दिइँदैन ।

**स्वाहा कुर्य्यान्न चात्रान्ते न चैव जुहुयाद्धविः ।**

**स्वाहाकारेण हुत्वाग्नौ पश्चान्मन्त्रं समापयेत् ॥१४॥**

यो अग्नौकरण होममा अन्तमा स्वाहा भन्नु हुँदैन र हवि पनि हाल्नु हुँदैन । स्वाहा शब्दका साथ अग्निमा आहुति दिएर त्यसपछि मन्त्र समाप्त गर्नू ।

**पित्र्ये यः पङ्क्तिमूर्द्धन्यस्तस्य पाणावनग्निमान् ।**
**हुत्वा मन्त्रवदन्येषां तूष्णीं पात्रेषु निःक्षिपेत् ॥१५॥**

पितृकर्ममा जो पङ्क्तिमा श्रेष्ठ छन् र अग्निहोत्री छैनन् तिनको हातमा आहुति दिनू तथा मन्त्रबिना नै हवन गरेर अरुका पात्रमा चुपचाप हालि दिनू ।

**नोङ्कुर्याद्धोममन्त्राणां पृथगादिषु कुत्रचित् ।**
**अन्येषाञ्चाविकृष्टानां कालेनाचमनादिना ॥१६॥**

होम मन्त्र वा अन्य त्यस नजिकका मन्त्रको शुरुमा तथा आचमन आदि गर्दा कतै पनि छुट्टै ॐ उच्चारण नगर्नू (अर्थात प्रत्येक मन्त्रका साथमा नै गर्नू ) ।

## कर्ममा बायाँ हातको प्रयोग

**सव्येन पाणिनेत्येवं यदत्र समुदीरितम् ।**
**परिग्रहणमात्रन्तत् सव्यस्यादिशति व्रतम् ॥१७॥**

'बायाँ हातले' भनेर जहाँ भनिएको छ त्यो लिन वा समाउने अर्थमा हो, बायाँ हातलाई कामको आदेश छैन ।

## कर्षू

**पिञ्जूल्याद्यभिसंगृह्य दक्षिणेनेतरात् करात् ।**
**अन्वारभ्य च सव्येन कुर्यादुल्लेखनादिकम् ॥१८॥**

दाहिने हातले देब्रे हातको कुशको गुच्छा लिएर फेरी त्यसलाई देब्रे हातले समाती धर्को कोर्ने (कर्षू) आदि काम गर्नू ।

## पिण्डदान

**यावदर्थमुपादाय हविषोऽर्भकमर्भकम् ।**
**चरुणा सह सन्नीय पिण्डान् दातुमुपक्रमेत् ॥१९॥**

प्रयोजन अनुसार अलि अलि हवि लिएर त्यसलाई चरुसँग मिसाई पिण्ड दिन शुरु गर्नू ।

**पितुरुत्तरकर्ष्वंशे मध्यमे मध्यमस्य तु ।**
**दक्षिणे तत्पितुश्चैव पिण्डान् पर्वणि निर्वपेत् ॥२०॥**

उत्तरतिरको कर्षू खण्डमा पितालाई, मध्यम कर्षू खण्डमा पितामहलाई र दक्षिणतिरको कर्षू खण्डमा प्रपितामहलाई औंसी आदि पर्वमा पिण्ड दिनू ।

**वाममावर्त्तनां केचिदुदगन्तं प्रचक्षते ।**
**सर्वं गौतमशाण्डिल्यौ शाण्डिल्यायन एव च ॥२१॥**

केही ऋषि दक्षिणबाट सबै प्राण घुमाएर उत्तरसम्म लैजाने भन्दछन् (दाहिने नाकबाट शुरु गरी देब्रे नाकबाट समाप्त गर्ने) । गौतम, शाण्डिल्य र शाण्डिल्यायनको पनि यही मत छ ।

**आवृत्य प्राणमायम्य पितृन् ध्यायन् यथार्थतः ।**
**जपंस्तेनैव चावृत्य ततः प्राणं प्रमोचयेत् ॥२२॥**

श्वासलाई माथितिर खिचेर तथा रोकेर यथार्थ रुपमा पितृको ध्यान गर्दै, प्राणायामको त्यही मन्त्र जप्दै फेरी फर्काएर श्वास छोड्नू ।

**अष्टमी होम (अष्टका)**

**शाकञ्च फाल्गुनाष्टम्यां स्वयं पत्न्यपि वा पचेत् ।**
**यस्तु शाकादिको होमः कार्योऽपूपाष्टकावृतः ॥२३॥**

फाल्गुणको अष्टमीमा आफैंले अथवा पत्नीले सागपात पकाउनू, सागपात आदिको जुन होम हुन्छ त्यो होम अपूपाष्टमीको होम अनुसार गर्नु पर्दछ ।

**अन्वाष्टक श्राद्ध**

**अन्वाष्टक्यं मध्यमायामिति गोभिलगौतमौ ।**
**वार्कषण्डिश्च सर्वासु कौत्सो मेनेऽष्टकासु च ॥२४॥**

अन्वाष्टक्य श्राद्ध गोभिल र गौतम मध्यमा-अष्टमीका दिन तथा वार्कषण्डि र कौत्स सबै अष्टमीमा गर्न हुने बताउँछन् ।

**स्थालीपाकं पशुस्थाने कुर्याद्यदानुकल्पितम् ।**
**श्रपयेत्तं सवत्सायास्तरुण्या गोः पयस्यनु ॥२५॥**

पशुको विधान भए त पशुको ठाउँमा स्थालीपाक (कसौंडी वा तसलामा पकाइएको) बनाउनू र त्यसलाई बाच्छो भएकी तरुनी गाईको दूधमा पकाउनू ।

॥ इति सप्तदशः खण्डः ॥१७॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको सत्रौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-२४७+२५=२७२
शुरुदेखिको श्लोकसङ्ख्या : २७२



॥ अथाष्टादशः खण्डः ॥
(अठारौं खण्ड)

। अथ विवाहोग्निहोमविधानवर्णनम् ।
(विवाहाग्नि र होम)

## एउटै कर्म

**सायमादि प्रातरन्तमेकं कर्म प्रचक्षते ।**
**दर्शान्तं पौर्णमासाद्यमेकमेव मनीषिणः ॥१॥**

विद्वानहरु साँझमा शुरु भएर बिहान सकिने तथा पूर्णिमाबाट शुरु भई औंसीमा सकिने कर्मलाई पनि एउटै कर्म भन्दछन् ।

## आदि होम

**ऊद्ध्वं पूर्णाहुतेर्दर्शः पौर्णमासोऽपि वाग्रिमः ।**
**य आयाति स होतव्य स एवादिरित श्रुतिः ॥२॥**

विवाहको पूर्णाहुति पछिका दिनमा आउने औंसी र पूर्णिमामा होम गर्नू । त्यसैलाई आदि होम भनिन्छ भनेर श्रुतिले भन्दछ ।

## बलिवैश्वदेव

**ऊद्ध्वं पूर्णाहुतेः कुर्यात् सायं होमादनन्तरम् ।**
**वैश्वदेवन्तु पाकान्ते बलिकर्मसमन्वितम् ॥३॥**

विवाहको पूर्णाहुति पछि साँझमा होम गरेपछि पकाई सकेर बलिकर्म सहित वैश्वदेव यज्ञ गर्नू ।

**ब्राह्मणान् भोजयेत् पश्चादभिरूपान् स्वशक्तितः ।**
**यजमानस्ततोऽश्नीयादिति कात्यायनोऽब्रवीत् ॥४॥**

त्यसपछि (बलिवैश्वदेव पछि) जजमानले स्वशक्ति अनुसार योग्य ब्राह्मणलाई भोजन गराई आफूले खानू भनी कात्यायनले बताएका छन् ।

**वैवाहिकेऽग्नौ कुर्वीत सायंप्रातस्त्वतन्द्रितः ।**
**चतुर्थीकर्म कृत्वैतदेतच्छाटयायनेर्मतम् ॥५॥**

वैवाहिक अग्निमा चतुर्थी होम गरेर अल्छी नगरी बिहानबेलुकी बलिवैश्वदेव कर्म गर्नू । यो शाटयायनको मत हो ।

**ऊद्र्ध्वं  पूर्णाहुते (सायं होमात्यो) प्रातर्हुत्वा तां सायमाहुतिम् ।**
**प्रातर्होमस्तदैव स्यादेष एवोत्तरो विधिः ॥६॥**

पूर्णाहुति पछि बिहान होम गरेर फेरी साँझमा होम गर्नू फेरी बिहान होम गर्नू यसैगरी अगाडि गर्दै जानू । ।

## छुटेको होम

**पौर्णमासात्यये हव्यं होता वा यदहर्भवेत् ।**
**तदहर्ज्जुहुयादेवममावास्यात्ययेऽपि च ॥७॥**

केही गरी पूर्णिमामा होम गर्न छुटे जुन दिन हव्य र होता उपलब्ध हुन्छ त्यही दिन होम गर्नू । औंसीमा छुटे पनि यसै गर्नू ।

## अशक्त र होम

**अहूयमानेऽनश्नंश्चेन्नयेत् कालं समाहितः ।**
**सम्पन्ने तुयथा तत्र हूयते तदिहोच्यते ॥८॥**

होम गर्न नसक्ने हुँदा भोजन पनि गरिएको नभए शान्त चित्तले समय बिताउनू । भोजन गरेको भए जसरी होम गर्नुपर्ने हो त्यो बताइन्छ ।

**अहुताः परिसंख्याय पात्रे कृत्वाहुतीः सकृत् ।**

**मन्त्रेण विधिवद् हुत्वाधिकमेवावरा अपि ॥९॥**

जति आहुति नदिइएको हो त्यो गनेर त्यसलाई एउटा भाँडामा एकचोटी राखी मन्त्रका साथ विधिले होम गर्नू । धेरै भए सो समेत होम गर्नू ।

## प्रायश्चित होम

**यत्र व्याहृतिभिर्होमः प्रायश्चित्तात्मको भवेत् ।**
**चतस्रस्तत्रं विज्ञेयाः स्त्रीपाणिग्रहणे यथा ॥१०॥**

जहाँ व्याहृतिका साथमा प्रायश्चित होम हुन्छ, त्यहाँ स्त्रीको पाणिग्रहण गर्दाखेरीको जस्तै चार आहुति हुन्छ ।

**अपि वाज्ञातमित्येषा प्राजापत्यापि चाहुतिः ।**
**होतव्या त्रिविकल्पोऽयं प्रायश्चित्तविधिः स्मृतः ॥११॥**

कि त 'अज्ञात...' मन्त्रले कि प्राजापत्य मन्त्रले आहुति दिनु पर्दछ । प्रायश्चितका यिनै तीन विकल्प मानिएको छ ।

## होम र वैवाहिक-अग्नि

**यद्यग्निरग्निनान्येन सम्भवेदाशितः क्वचित् ।**
**अग्नये विविचय इति जुहुयाद्वा घृताहुतिम् ॥१२॥**

यदि अग्नि अरु अग्निले ढाकिएको भए 'अग्नये विविचये स्वाहा' मन्त्रले आहुति दिनू वा घिउको आहुति दिनू ।

**अग्नयेक्प्सुमते चैव जुहुयाद्वैद्युतेन चेत् ।**
**अग्नये शुचये चैव जुहुयाच्चेदनग्निना ॥१३॥**

यदि अग्नि विद्युत-अग्निले ढाकिएमा 'अग्नयेऽप्सुमते स्वाहा' मन्त्रले होम गर्नू । यदि अग्नि अग्नि बाहेकका कुनै वस्तुले ढाकिएमा 'अग्नये शुचये स्वाहा' मन्त्रले होम गर्नू ।

**गृहदाहाग्निनाग्निस्तु यष्टव्यः क्षामवान् द्विजैः ।**
**दावाग्निना च संसर्गो हृदयं यदि तप्यते ॥१४॥**

यदि घरमा आगो लागेर अग्नि ढाकिएर निभेमा ब्राह्मणले त्यसको यज्ञ गर्नू । वनडँढेलोको सामिप्यताले यदि हृदय पोले पनि यज्ञ गर्नू ।

**द्विर्भूतो यदि संसृज्येत् संसृष्टमुपशामयेत् ।**
**असंस्पृष्टं जागरयेद् गिरिशर्मैवमुक्तवान् ॥१५॥**

यी दुई किसिमले अग्नि अर्को अग्निका साथ घुलमिल भए अग्निलाई निभाउनू । घुलमिल नभएको भए बाल्नू भनी गिरिशर्माले भनेका छन् ।

**न स्वेऽग्नावन्यहोमः स्यान् मुक्त्वैकां समिदाहुतिम् ।**
**स्वगर्भे (स्वभगः) सत्क्रियार्थञ्च यावच्चासौ प्रजायते ॥१६॥**

आफ्नो गर्भको पूजाका खातिर तथा त्यो जबसम्म उत्पन्न हुँदैन तबसम्मको समिधाको एउटा आहुतिलाई छाडी आफ्नो (वैवाहिक) अग्निमा अरु कसैका लागि होम गर्नु हुँदैन ।

**अग्निस्तु नामधेयादौ होमे सर्वत्र लौकिकः ।**
**न हि पित्रा समानीतः पुत्रस्य भवति क्वचित् ॥१७॥**

न्वारान आदि संस्कारका होममा सबैतिर लौकिक अग्नि हुन्छ । पिताले लेराएको वा प्रकट गराएको अग्नि कतै पनि पुत्रका लागि हुँदैन ।

## प्रायश्चित होम

**यस्याग्नावन्यहोमः स्यात् स वैश्वानरदैवतम् ।**
**चरुं निरुप्य जुहुयात् प्रायश्चित्तं तु तस्य तत् ॥१८॥**

जसको अग्निमा अरु कसैको होम हुन जान्छ, उसले वैश्वानर देवताको चरु बनाई होम गर्नू, यही नै त्यसको प्रायश्चित हो ।

**परेणाग्नौ हुते स्वार्थं परस्याग्नौ हुते स्वयम् ।**
**पितृयज्ञात्यये चैव वैश्वदेवद्वयस्य च ॥१९॥**
**अनिष्ट्वा नवयज्ञेन नवान्नप्राशने तथा ।**
**भोजने पतितान्नस्य चरुर्वैश्वानरो भवेत् ॥२०॥**

अरुले आफ्नो अग्निमा होम गरे, आफूले अरुको अग्निमा होम गरे, पितृयज्ञ तोडिए, दुई वटा बलि वैश्वदेव यज्ञ नगरिए, न्वागी-होम नगरी नयाँ अन्न खाए तथा पतितको भोजन गरे वैश्वानर चरुको विधान छ ।

## पिण्डदिने अधिकार

**स्वपितृभ्यः पिता दद्यात् सुतसंस्कारकर्मसु ।**

**पिण्डानोद्वहनात्तेषां तस्याभावे तु तत्क्रमात्॥२१॥**

पुत्रका संस्कार कर्ममा पिता आफ्ना पितृलाई पिण्ड देओस् किनकि उही नै पिण्ड दिने व्यक्ति हो। उ नभए उसको क्रमले जो अरु बन्धुजन छन् तिनले पिण्ड देऊन्।

### आशिर्वचन र रजस्वला भएकी पत्नी

**भूतिप्रवाचने पत्नी यद्यसन्निहिता भवेत्।**
**रजोरोगादिना तत्र कथं कुर्वन्ति याज्ञिकाः॥२२॥**

कल्याणका लागि ऋत्विजबाट आशिर्वाद लिने समयमा रजोदर्शन या रोगले गर्दा पत्नी नजिकै नभए याज्ञिकले के गर्ने ?।

**महानसेऽन्नं या कुर्यात् सवर्णा तां प्रवाचयेत्।**
**प्रवणाद्यपि वा कुर्यात् कात्यायनवचो यथा॥२३॥**

भान्छे बनेकी सजातीय स्त्रीलाई आशिर्वचन गराउनू अथवा ॐ आदि जप्नू भनी कात्यायनले भनेका छन्।

### यज्ञमा विभिन्न कुराको परिमाण

**यज्ञवास्तुनि मुष्ट्याञ्च स्तम्बे दर्भवटौ तथा।**
**दर्भसंख्या न विहिता विष्टरास्तरणेषु च॥२४॥**

यज्ञशाला, कुशमुठि र कुशवटमा कुशको संख्या निश्चित गरिएको छैन। यस्तै आसन र बिछयौनाको पनि संख्या तोकिएको छैन।

॥ इति अष्टादशः खण्डः ॥१८॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको अठारौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-२७२+२४=२९६
शुरुदेखिको श्लोकसङ्ख्या : २९६

## ॥ अथैकोनविंशतितमः खण्डः ॥
## (उन्नाईसौं खण्ड)
## । अथ स्त्रीधर्मवर्णनम्।

### अग्निकर्म र पत्नी

**निःक्षिप्याग्निं स्वदारेषु परिकल्प्यार्त्विजं तथा ।**
**प्रवसेत् कार्यवान् विप्रो मृषैव न चिरं क्वचित् ॥१॥**

अग्निकर्म श्रीमतिलाई जिम्मा लगाएर र ऋत्विज नियुक्त गरेर कामकाजी ब्राह्मण व्यर्थैमा लामो समय अन्त कतै नबसोस् ।

**मनसा नैत्यकं कर्म प्रवसन्नप्यतन्द्रितः ।**
**उपविश्य शुचिः सर्वं यथाकालमनुद्रवेत् ॥२॥**

परदेशमा रहँदा पनि अल्छि नगरी पवित्र बसेर सबै नित्य कर्महरु समय अनुसार मनले सम्पन्न गरोस् ।

**पत्न्या चाप्यवियोगिन्या शुश्रूष्योऽग्निर्विनीतया ।**
**सौभाग्यवित्तावैधव्यकामया भर्तृभक्तया ॥३॥**

वियोग नचाहने, नम्र तथा शौभाग्यवती एवं धन र अवैधव्य चाहने पतिभक्त पत्नीले पनि अग्निमा होम गर्नु पर्दछ ।

**या वा स्याद्वीरसूरासामाज्ञासम्पादिनी प्रिया ।**
**दक्षा प्रियंवदा शुद्धा तामत्र विनियोजयेत् ॥४॥**

पत्नीहरुमा जो वीरलाई जन्मदिने, आज्ञा पालन गर्ने, प्रिया, दक्ष, मिठो वचन बोल्ने र पवित्र विचारकी छे तिनैलाई होम गर्न नियुक्त गर्नू ।

**दिनत्रयेण वा कर्म यथा ज्यैष्ठं स्वशक्तितः ।**
**विभज्य सह वा कुर्युर्यथाज्ञानञ्च शास्त्रवत् ॥५॥**

अथवा तीन दिनमा वरिष्ठताका आधारमा कामको बाँडफाँड गरी वा मिलेर आआफ्नो शक्ति, ज्ञान र शास्त्रको मर्यादा अनुसार गरुन् ।

## उत्तम पत्नी

**स्त्रीणां सौभाग्यतो ज्यैष्ठं विद्ययैव द्विजन्मनाम् ।**
**नहि ख्यात्या न तपसा भर्त्ता तुष्यति योषिताम् ॥६॥**

स्त्रीहरुको वरिष्ठता सुन्दरताले र द्विजको विद्याले हुन्छ । पति : पत्नीको न ख्यातिले न तपले प्रसन्न हुन्छ ।

**भर्त्तुरादेशवर्त्तिन्या यथोमा बहुभिर्व्रतैः ।**
**अग्निश्च तोषितोऽत्र सा स्त्री सौभाग्यमाप्नुयात् ॥७॥**

पार्वतीले जस्तै धेरै व्रत बसी पतिआज्ञा पालन गर्दै जुन स्त्रीले पूर्वजन्ममा अग्निलाई प्रसन्न पारेकी छे त्यसले सौभाग्य प्राप्त गर्दछे ।

**विनयावनताऽपि स्त्री भर्त्तुर्या दुर्भगा भवेत् ।**
**अमुत्रोमाग्निभर्तृणामवज्ञातिः कृता तया ॥८॥**

नम्रताले नुहिएकी भएपनि जो स्त्री पतिका लागि कुरुपा छे भने सम्झनु कि पूर्वजन्ममा तिनले उमा, अग्नि र पतिको अवहेलना गरेकि थिइन् ।

## बिहानको साइत

**श्रोत्रियं सुभगां गाञ्च साग्निमग्निचितिं तथा ।**
**प्रातरुत्थाय यः पश्येदापद्भ्यः स प्रमुच्यते ॥९॥**

बिहान उठेर जो मानिस वेदपाठी ब्राह्मण, सौभाग्यवती स्त्री, गाई, अग्नि र अग्निकुण्ड देख्छ उ विपत्तिबाट मुक्त हुन्छ ।

**पापिष्ठं दुर्भगाामन्त्यं नग्नमुत्कृत्तनासिकम् ।**
**प्रातरुत्थाय यः पश्येत् स कलेरुपयुज्यते ॥१०॥**

बिहान उठेर जो मानिस अती पापी, अभागी स्त्री, निच जातिका मानिस र नकटोलाई देख्दछ उसलाई कलिले छुन्छ ।

## दुष्टा र असल स्त्री

**पतिमुल्लङ्घ्यमोहात् स्त्री कं कं न नरकं व्रजेत् ।**
**कृच्छ्रान्मनुष्यतां प्राप्य किं किं दुःखं न विन्दति ॥११॥**

मोहले गरिकन पतिले भनेको नमान्ने स्त्री कुन कुन मात्रै नरकमा पर्दिन । फेरी ठूलो कष्टले जब मानिस भएर जन्मन्छे त्यसपछि पनि के के मात्रै दुःख भोग्दिन र ।

**पतिशुश्रूषयैव स्त्री कान्न लोकान् समश्नुते ।**
**दिवः पुनरिहायाता सुखानामम्बुधिर्भवेत् ॥१२॥**

पतिको सेवाले स्त्री कुन लोकमा मात्रै जान्न । फेरी स्वर्गबाट यसलोकमा आई सुखको सागर हुन्छे ।

## बहुविवाह र होम

सदारोऽन्यान् पुनर्दारान् कथञ्चित् कारणान्तरात् ।
य इच्छेदग्निमान् कर्तुं क्वहोमोऽस्य विधीयते ॥१३॥

पत्नी भएको अग्निहोत्री पुरुष कुनै कारणवश पुनः अर्की स्त्रीलाई पत्नी बनाउन चाहन्छ भने त्यसले गर्ने होम के होम ? अर्थात उसलाई होमको अधिकार छैन ।

## होमको अग्नि

स्वेऽग्नावेव भवेद्धोमो लौकिके न कदाचन ।
न ह्याहिताग्नेः स्वं कर्म लौकिकेऽग्नौ विधीयते ॥१४॥

आफ्नो अग्निमा नै होम हुन्छ, लौकिक (साधारण) अग्निमा कहिल्यै हुँदैन । अग्निको आधान गर्ने मानिसका लागि आफ्नो कर्म लौकिक अग्निमा गर्ने अधिकार छैन ।

## विवाहको होम

षडाहुतिकमन्येन जुहुयाद् ध्रुवदर्शनात् ।
न ह्यात्मनोऽर्थं स्यात्तावद्यावन्न परिणीयते ॥१५॥

विवाहमा ध्रुव र अरुन्धती ताराको दर्शन नगरेसम्म अग्निमा षडाहुतिक (छ आहुति) अरुबाटै हाल्न लगाउनु । यो तबसम्म आफैंमा हुँदैन जबसम्म विवाह हुँदैन ।

पुरस्तात् त्रिविकल्पं यत् प्रायश्चित्तमुदाहृतम् ।
तत्षडाहुतिकं शिष्टैर्यज्ञविद्भि : प्रकीर्तितम् ॥१६॥

पहिले बताइएका तीन थरी जुन प्रायश्चित छन् त्यसैलाई यज्ञवेत्ता शिष्टहरुबाट षडाहुति भनी बताइएको छ ।

॥ इत्येकोनविंशतितमः खण्डः ॥१९॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको उन्नाईसौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-२९६+१६=३१२
शुरुदेखिको श्लोकसङ्ख्या : ३१२



## ॥ अथ विंशः खण्डः ॥
## (बिसौं खण्ड)

। अथ द्वितीयादिस्त्रीकृते सति वैदिकाग्निवर्णनम् ।

## वैवाहिक अग्निको प्रयोग र अग्निहोत्रिको दाहसंस्कार

**असमक्षन्तु दम्पत्योर्होतव्यं नर्त्विगादिना ।**
**द्वयोरप्यसमक्षं हि भवेद् हुतमनर्थकम् ॥१॥**

ऋत्विग् आदिले पति र पत्नीका पछि होम गर्नु हुँदैन (अगाडि नै गर्नु) । गरिन्छ भने त्यो अनर्थक हुन्छ ।

**विहायाग्निं सभार्यश्चेत् सीमामुल्लङ्घ्य गच्छति ।**
**होमकालात्यये तस्य पुनराधानमिष्यते ॥२॥**

विवाहको अग्निलाई छोडेर यदि कोही पत्नी समेत सीमापारी जान्छ र होम गर्ने समय बित्दछ भने उसले पुनः अग्निको आधान गर्नु पर्दछ ।

**अरण्योः क्षयनाशाग्निदाहेष्वग्निं समाहितः ।**
**पालयेदुपशान्तेऽस्मिन् पुनराधानमिष्यते ॥३॥**

अग्नि दाह गर्दा अरणी क्षीण भई नष्ट भएमा अग्निलाई सावधान भई रक्षा गर्नू । निभेमा फेरी आधान गर्नु पर्दछ ।

**ज्येष्ठा चेद्बहुभार्यस्य अतिचारेण गच्छति ।**
**पुनराधानमत्रैक इच्छन्ति न तु गौतमः ॥४॥**

धेरै श्रीमति हुने पुरुषकी जेठीले आचारको उल्लङ्घन गरेको स्थितिमा कात्यायन पुनः अग्न्याधान चाहन्छन् तर गौतम चाहँदैनन् ।

**दाहयित्वाग्निभिर्भार्यां सदृशीं पूर्वसंस्थिताम् ।**
**पात्रश्चाथाग्निमादध्यात् कृतदारोऽविलम्बितः ॥५॥**

पहिले जीवित तर अहिले बितेकी पत्नीको अग्नि र होमका पात्रले दाह संस्कार गराएर त्यसपछि तुरुन्त अर्को विवाह गरी अग्न्याधान गर्नू ।

**एवंवृत्तां सवर्णां स्त्रीं द्विजातिः पूर्वसारिणीम् ।**
**दाहयित्वाग्निहोत्रेण यज्ञपात्रैश्च धर्मवित् ॥६॥**
**द्वितीयाञ्चैव यः पत्नीं दहेद्वैतानिकाग्निभिः ।**
**जीवत्यां प्रथमायान्तु ब्रह्मघ्नेन समं हि तत् ॥७॥**

अगाडि अगाडि हिँड्ने समान वर्णकी पत्नीको अग्निहोत्र र यज्ञपात्रले दाह संस्कार गराई जो धर्मज्ञ ब्राह्मण दोश्री पत्नीलाई पनि वैतानिक (यज्ञको) अग्निले जलाउँछ वा पहिली पत्नी जिउँदो हुँदै दोश्रीलाई वैतानिक अग्निले जलाउँछ भने त्यो कर्म ब्रह्महत्या समान हुन्छ ।

**मृतायान्तु द्वितीयायां योऽग्निहोत्रं समुत्सृजेत् ।**
**ब्रह्मोज्झं तं विजानीयाद् यश्च कामात् समुत्सृजेत् ॥८॥**

दोश्री पत्नी मरेपछि जो मानिस अग्निहोत्र त्याग गर्दछ वा स्वेच्छाले छाड्दछ, उसलाई वेदत्यागी सम्झिनू ।

**मृतायामपि भार्य्यायां वैदिकाग्निं न हि त्यजेत् ।**
**उपाधिनापि तत् कर्म यावज्जीवं समापयेत् ॥९॥**

दोश्री पत्नी मरेपछि अग्निहोत्र त्याग गर्नु हुँदैन । कुश वा धातुको पत्नीको आकृति बनाई त्यो कर्म जीवनभर गर्नू ।

**रामोऽपि कृत्वा सौवर्णीं सीतां पत्नीं यशस्विनीम् ।**
**ईजे यज्ञैर्बहुविधैः सह भ्रातृभिरच्युतः ॥१०॥**

भगवान् रामले पनि यशस्विनी सीताको सुनको प्रतिरुप बनाएर भाईहरुका साथ धेरै प्रकारका यज्ञ गरेका थिए ।

**यो दहेदग्निहोत्रेण स्वेन भार्य्यां कचञ्चन ।**
**स स्त्री सम्पद्यते तेन भार्य्या वास्य पुमान् भवेत् ॥११॥**

जसले कुनै तरिकाले आफ्नो अग्निहोत्रले पत्नीलाई जलाउँदछ, त्यो कर्मले गर्दा अर्को जन्ममा उ स्त्री र उसकी पत्नी पुरुष बन्दछन् ।

**भार्य्या मरणमापन्ना देशान्तरगतापि वा ।**
**अधिकारी भवेत्पुत्रो महापातकिनि द्विजे ॥१२॥**

कुनै महापापी द्विजकी पत्नी मरेकी भए वा परदेश गएकी भए छोरो यज्ञको अधिकारी हुन्छ ।

**मान्या चेन्म्रियते पूर्वं भार्य्या पतिविमानिता ।**
**त्रीणि जन्मानि सा पुंस्त्वं पुरुषः स्त्रीत्वमर्हति ॥१३॥**

माननीय हुँदाहुँदै पनि पतिबाट अपमानित भएर मर्ने पत्नी तीन जन्मसम्म पुरुषत्वको र पुरुष स्त्रीत्वको अधिकारी हुन जान्छ ।

**पूर्वैव योनिः पूर्वावृत् पुनराधानकर्मणि ।**
**विशेषोऽत्राग्न्युपस्थानमाज्याहुत्यष्टकं तथा ॥१४॥**

अग्निको पुनः आधान गर्दा पनि पहिलेकै अरणी र विधि हुन्छ । केवल अग्निको स्तुति र आठ आज्य आहुति विशेषरूपले गर्नु पर्दछ ।

**कृत्वा व्याहृतिहोमान्तमुपतिष्ठेत पावकम् ।**
**अध्यायः केवलाग्नेयः कस्ते जामिर मानसः ॥१५॥**
**अग्निमीले अग्न आयाह्यग्न आयाहि वीतये ।**
**तिस्रोवग्निर्ज्योतिरित्यग्निं दूतमग्ने मृडेति च ॥१६॥**
**इत्यष्टावाहतीर्हुत्वा यथाविध्यनुपूर्वशः ।**
**पूर्णाहुत्यादिकं सर्वमन्यत् पूर्ववदाचरेत् ॥१७॥**

व्याहृति होमका अन्तसम्मका कर्म गरी अग्निको स्तुति गर्नू । "कस्ते जामिर मानसः" यो अग्नि देव मात्रको अध्याय पाठ गर्नू । "अग्निमीले पुरोहितं । अग्न आयाह्यग्निभिः । अग्न आयाहिवीतये", अग्निर्ज्योतिर्ज्योतिरग्निः स्वाहा आदि तीन आहुति तथा अग्निं दूतं., अग्ने मृड गरी आठ आहुति विधिले दिएर पूर्णाहुति आदि बाँकी काम पहिले जसरी गर्नू ।

**अरण्योरल्पमप्यंगं यावत्तिष्ठति पूर्वयोः ।**
**न तावत् पुनराधानमन्यारण्योर्विधीयते ॥१८॥**

जबसम्म पहिलेका अरणी अलिकति मात्रै पनि बाँकी हुन्छन् तबसम्म अरु अरणी फेरी आधान नगर्नू ।

**विनष्टं स्रुक् स्रुवं न्युब्जं प्रत्यक्स्थलमुदर्चिषि ।**
**प्रत्यगग्रञ्च मुसलं प्रहरेज्जातवेदसि ॥१९॥**

राम्ररी नष्ट भएका स्रुक र स्रुवलाई जमिनमा उल्टो पारेर तथा मुसललाई सिधा पारेर उठेका आगोको प्कामा होम हाल्नू ।

॥ इति विंशः खण्डः ॥२०॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको बिसौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-३१२+१९=३३१
शुरुदेखिको श्लोकसङ्ख्या : ३३१

**॥ अथैकविंशः खण्डः ॥**
**(एक्काईसौं खण्ड)**

## । अथ मृतदाहसंस्कारवर्णनम् ।
## (अग्निहोत्रीको दाहसंस्कार)

### अन्तिम समयमा अशक्त हुँदाको होम

**स्वयं होमासमर्थस्य समीपमुपसर्पणम् ।**
**तत्राप्यसक्तस्य सतः शयनाच्चोपवेशनम् ॥१॥**

यदि आफैं होमगर्न नसक्ने भए अग्निका नजिकै गएर बस्नू । यसो गर्न पनि नसक्ने भए खाटबाट तल ओर्लेर बस्नू ।

**हुतायां सायमाहुत्यां दुर्बलश्चेद् गृही भवेत् ।**
**प्रातर्होमस्तदैव स्याज्जीवेच्चेच्छुः पुनर्न वा ॥२॥**

साँझमा होम गरेपछि गृहस्थ मरणासन्न भए बिहानको होम उ जीवित भएमा वा होम गर्न चाहने भएमा मात्र हुन्छ नत्र हुँदैन ।

### अन्तिम समयमा सफा कपडा लगाइ दिनू र ठाउँ सार्नू

**दुर्बलं स्नापयित्वा तु शुद्धचैलाभिसंवृतम् ।**
**दक्षिणाशिरसं भूमौ बर्हिष्मत्यां निवेशयेत् ॥३॥**

मर्न लागेको व्यक्तिलाई नुहाइदिएर सफा कपडा लगाइदिनू र दक्षिणतिर टाउको पारी कुश ओछ्याइएको भुईंमा सुताउनू ।

### प्राण गएपछिका कर्तव्य

**घृतेनाभ्यक्तमाप्लाव्य सवस्त्रमुपवीतिनम् ।**
**चन्दनोक्षितसर्वाङ्गं सुमनोभिर्विभूषितम् ॥४॥**
**हिरण्यशकलान्यस्य क्षिप्त्वा छिद्रेषु सप्तषु ।**
**मुखेष्वथापिधायैनं निर्हरेयुः सुतादयः ॥५॥**

शरीरमा घिउ दलेकाहरुले वस्त्र सहित नुहाइएको, जनै लगाइएको, सबै अङ्गमा चन्दन दलिएको तथा फूलले ढाकिएको मृतकको सात वटै प्वालमा सुनका टुक्रा हालेर मुख ढाकी मसानमा लिएर जाऊन् ।

### मलाम

आमपात्रेऽन्नमादाय प्रेतमग्निपुरःसरम् ।
एकोऽनुगच्छेत्तस्यार्द्धमर्द्धं पथ्युत्सृजेद्भुवि ॥६॥

एक जना व्यक्ति काँचो माटाको भाँडोमा अन्न लिएर अगाडि अगाडि अग्नि जसको छ त्यस्तो लाशको पछिपछि हिँड्नू र आधा बाटोमा पुगेपछि आधा अन्न जमिनमा राखि दिनू ।

## घाटका कर्म

ऊर्द्धमादहनं प्राप्त आसीनो दक्षिणामुखः ।
सव्यं जान्वाच्य शनकैः सतिलं पिण्डदानवत् ॥७॥

शव जलाउने स्थानमा पुगेर दक्षिणतिर फर्की बायाँ घुँडा टेकेर आधी अन्न विस्तारै विस्तारै तिल सहित पिण्डदान दिएझैं गरेर देओस् ।

अथ पुत्रादिनाप्लुत्य कुर्याद्दारुचयं महत् ।
भूप्रदेशे शुचौ देशे पश्चाच्चित्यादिलक्षणे ॥८॥

त्यसपछि पुत्र आदिले शवलाई नुहाइ दिएर चिता आदिको लागि उचित पवित्र जमिनमा दाउराले ठूलो चिता बनाऊन् ।

ततोत्तानं निपात्यैनं दक्षिणाशिरसं मुखे ।
आज्यपूर्णां स्रूचं दद्याद् दक्षिणाग्रां नसि स्रुवम् ॥९॥

त्यसपछि दक्षिण टाउको फर्काई शवलाई सिधा सुताएर घिउले भरिएको स्रुक्लाई मुखमा र दक्षिणतिर मुख फर्केको स्रुवलाई नाकमा राखिदिनू ।

पादयोरधरां प्राचीमरणीमुरसीतराम् ।
पार्श्वयोः शूर्पचमसे सव्यदक्षिणयोः क्रमात् ॥१०॥

तल्लो अरणीलाई दुईटै गोडाको अगाडि र अर्को अरणीलाई छातीमा तथा नाङ्लो र यज्ञका भाँडा क्रमैले शवको देब्रे र दाहिनेतिर नजिकै राख्नू ।

मुसलेन सह न्युब्जमन्तरूर्वोरुलूखलम् ।
चत्रौवीलीकमत्रैवमनश्रुनयनो विभीः ॥११॥

मुसल सहित ओखललाई घोप्टयाएर दुई तिघ्राको बीचमा तथा चत्र र ओबिली पनि आँखामा आँशु ननिकाली नडराई पुत्रले यहीँ राख्नू ।

**दागबत्ती**

**अपसव्येन कृत्वैतद्वाग्यतः पितृदिङ्मुखः ।**
**अथाग्निं सव्यजान्वक्तो दद्याद्दक्षिणतः शनैः ॥१२॥**
**अस्मात्त्वमधिजातोऽसि त्वदयं जायतां पुनः ।**
**असौ स्वर्गाय लोकाय स्वाहेति यजुरीरयन् ॥१३॥**

अनि अपसव्य भएर, नबोली, दक्षिण फर्की बायाँ घुँडा टेकी विस्तारै दक्षिणतिर बाट "अस्मात् त्वमधि जातोऽसि त्वदयं जायतां पुनः, असौ स्वर्गाय लोकाय स्वाहा" भन्दै अग्नि दिनू ।

**एवं गृहपतिर्दग्धः सर्वं तरति दुष्कृतम् ।**
**यश्चैनं दाहयेत् सोऽपि प्रजां प्राप्नोत्यनिन्दिताम् ॥१४॥**

यसरी दाह गरिएको गृहस्थले सबै पापलाई दाह गर्दछ तथा जो यसरी दाह गर्दछन् तिनले पनि उत्तम सन्तान पाउँछन् ।

**यथा स्वायुधधृक् पान्थो ह्यरण्यान्यपि निर्भयः ।**
**अतिक्रम्यात्मनोऽभीष्टं स्थानमिष्टांश्च विन्दति ॥१५॥**
**एवमेषोऽग्निमान् यज्ञपात्रायुधविभूषितः ।**
**लोकानन्यानतिक्रम्य परं ब्रह्मैव विन्दति ॥१६॥**

जसरी उत्तम शस्त्र लिएको बटुवाले नडराई, बन पार गरी चाहेको स्थानमा पुग्न र काममा सफलता पाउँदछ त्यसरी नै अग्निहोत्री पनि यज्ञपात्र रुपी हतियारले विभूषित भएर अन्य लोकलाई नाघेर परब्रह्मलाई पाउँदछ ।

॥ इत्येकविंशः खण्डः ॥२१॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको एक्काईसौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-३३१+१६=३४७
शुरुदेखिको श्लोकसङ्ख्या : ३४७



**॥ अथ द्वाविंशः खण्डः ॥**
**(बाइसौं खण्ड)**

**। अथ दाहसंस्कारवर्णनम् ।**
**(दाहसंस्कार)**

**मलामी, जलदान र स्नान**

**अथानवेक्षमेत्यापः सर्व एव शवस्पृशः ।**
**स्नात्वा सचैलमाचम्य दद्युरस्योदकं स्थले ॥१॥**

शवदाह पछि शव छुने सबैले चितातिर नहेरी कपडा सहित नुहाएर आचमन गरी मृतकलाई भूमिमा जल दिऊन् ।

**गोत्रनामानुवादान्ते तर्पयामीत्यनन्तरम् ।**
**दक्षिणाग्रान् कुशान् कृत्वा सतिलन्तु पृथक् पृथक् ॥२॥**

मृतकको गोत्र र नामका अन्तमा "तर्पयामि" भन्नू र त्यसपछि दक्षिणतिर टुप्पो फर्केका कुश ओछ्याएर तिल सहित अलग अलग जल दिनू ।

**एवं कृतोदकान् सम्यक् सर्वान् शाद्वलसंस्थितान् ।**
**आप्लुप्य पुनराचान्तान् वदेयुस्तेऽनुयायिनः ॥३॥**

## मलामीको कर्तव्य

जलदान क्रिया राम्ररी सकी स्नान गरेर आचमन गरेका मलामीहरुले हरियो घाँसको चउरमा बसेका मृतकका आफन्तलाई यो कुरा भनून्- ।

**मा शोकं कुरुतानित्ये सर्वस्मिन् प्राणधर्मणि ।**
**धर्मं कुरुत यत्नेन यो वः सह गमिष्यति ॥४॥**

सबै प्राणी अनित्य हुन् यसैले तिमी शोक नगर । प्रयत्न गरी धर्म कमाउ जो (यही) सँगसँगै जान्छ ।

**मानुष्ये कदलीस्तम्भे निःसारे सारमार्गणम् ।**
**यः करोति स संमूढो जलबुद्बुदसन्निभे ॥५॥**

केराको खम्बा समान दुर्बल, पानीको फोका समान क्षणिक र सारहीन मनुष्य जीवनमा जो सार खोज्दछ त्यो अज्ञानी हो ।

**गन्त्री वसुमती नाशमुदधिर्दैवतानि च ।**
**फेनप्रख्यः कथं नाशं मर्त्यलोको न यास्यति ॥६॥**

पृथ्वी नाश हुन्छ अनि समुद्र र देवता पनि नाश हुन्छन् भने फिँज समान देखिने यो मर्त्यलोक कसरी नष्ट नहुनु ?

**पञ्चधा सम्भृतः कायो यदि पञ्चत्वमागतः ।**
**कर्मभिः स्वशरीरोत्थैस्तत्र का परिवेदना ॥७॥**

पञ्चतत्वले बनेको शरीर यदि आफैंबाट उत्पन्न कर्मका कारणले पञ्चतत्वमै बाँडिन्छ (वा गएर मिसिन्छ) भने यसमा शोक गर्ने के नै कुरा छ र ?

**सर्वेऽक्षयान्ता निचयाः पतनान्ताः समुच्छ्रयाः ।**
**संयोगा विप्रयोगान्ता मरणान्तं हि जीवितम् ॥८॥**

सबै सञ्चय भएका कुरा क्षयमा अन्त हुने हुन्छन्, उँचाई (समृद्धि) पतनमा अन्त हुन्छ, संयोग वियोगमा अन्त हुन्छ भने जीवन मरणमा अन्त हुन्छ ।

**श्लेष्माश्रु बान्धवैर्मुक्तं प्रेतो भुङ्क्ते यतोऽवशः ।**
**अतो न रोदतव्यं हि क्रियाः कार्याः प्रयत्नतः ॥९॥**

मृतकका आफन्तले बगाएको आँशु, थुकेको थुक र खकार विवश भई प्रेतले खानुपर्ने हुनाले कसैको मृत्यु हुँदा यी कुरा ननिकाल्नू, बरु प्रयत्नपूर्वक श्राद्धतर्पण गरी प्रेतात्माको कल्याण गर्नू ।

**एवमुक्त्वा व्रजेयुस्ते गृहाँय्ल्लघुपुरः सराः ।**
**स्नानाग्निस्पर्शनाज्याशैः शुध्येयुरितरे कृतैः ॥१०॥**

आफन्तलाई यसरी सम्झाएपछि सबै जना कम उमेरकालाई अगाडि अगाडि लगाएर घाटबाट घरतिर जाऊन् । अरुहरु (मृतकका घरपरिवार बाहेकका) ले नुहाएर आगो छोई घिउ खाई शुद्ध होऊन् ।

॥ इति द्वाविंशः खण्डः ॥२२॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको बाइसौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्टयङ्काः-३४७+१०=३५७
शुरुदेखिको श्लोकसङ्ख्या : ३५७

## ॥ अथ त्रयोविंशः खण्डः ॥
## (तेइसौं खण्ड)

### । अथ विदेशस्थमृतपुरुषाणां दाहसंस्कारवर्णनम् ।

### विदेशमा बितेका अग्निहोत्रीको दाहसंस्कार र जुठो

**एवमेवाहिताग्नेस्तु पात्रन्यासादिकं भवेत् ।**
**कृष्णाजिनादिकश्चात्र विशेषः सूत्रचोदितः ॥१॥**

यस्तै परदेशमा मरेका अग्निहोत्रीको पनि चितामा यज्ञपात्रहरु राख्नू । यसमा शास्त्रले बताए बमोजिम कालो मृगछाला आदि राख्ने काम बढी हुन्छ ।

**विदेशमरणेऽस्थीनि ह्याहृत्याभ्यज्य सर्पिषा ।**
**दाहयेदूर्णयाच्छाद्य पात्रन्यासादि पूर्ववत् ॥२॥**

विदेशमा मृत्यु हुँदा अस्थिहरु लेराई, घिउले भिजाएर तथा ऊनले छोपेर दाह गर्नू (जलाउनू) । यज्ञपात्र आदि राख्ने विधि भने पहिले बताए जस्तै हुन्छ ।

**अस्थ्नामलाभे पर्णानि सकलान्युक्तयावृता ।**
**भर्जयेदस्थिसंख्यानि ततः प्रभृति सूतकम् ॥३॥**

अस्थि नभेटिए अस्थिको संख्याका पात लिएर ती सबै पातलाई विधिले जलाउनू । त्यसै दिनबाट जुठो शुरु हुन्छ ।

**महापापी अग्निहोत्री र अन्तिम संस्कार**

**महापातकसंयुक्तो दैवात् स्यादग्निमान् यदि ।**
**पुत्रादिः पालयेदग्निं युक्त आदोषसंक्षयात् ॥४॥**

अग्निहोत्री दुर्भाग्यले महापापबाट ग्रस्त भए पुत्र आदि कसैले सावधान भएर पापबाट नछुटुन्जेल अग्नि पालना गर्नू ।

**प्रायश्चित्तं न कुर्याद्यः कुर्वन् वा म्रियते यदि ।**
**गृह्यं निर्वापयेच्छ्रौतमश्वसेत् सपरिच्छदम् ॥५॥**

यदि अग्निहोत्रीले महापापको प्रायश्चित जीवनमा गर्न पाएन वा गर्दागर्दै मऱ्यो भने उसको गृह्य अग्नि निभाइदिनू र सबै सामग्रि सहित श्रौत अग्नि जलमा फालि दिनू ।

**सादयेदुभयं वाप्सु ह्यद्भ्योग्निरभवद्यतः ।**
**पात्राणि दद्याद्विप्राय दहेदप्स्वेव वा क्षिपेत् ॥६॥**

अथवा दुवै अग्निलाई जलमा सेलाउनू । किनकि जलबाटै अग्नि उत्पन्न भएको हो । यज्ञपात्र ब्राह्मणलाई दिनू वा जलाउनू वा जलमै सेलाउनू ।

**अग्निहोत्रीको मर्यादामा बसेकी स्त्रीको दाहसंस्कार**

**अनयैवावृता नारी दग्धव्या या व्यवस्थिता ।**
**अग्निप्रदानमन्त्रोऽस्या न प्रयोज्य इति स्थितिः ॥७॥**

यही तरिकाले अग्निहोत्रीकी मर्यादा पालना गर्ने पत्नीको पनि दाह संस्कार गरिनु पर्दछ । चितामा दागबत्ती दिँदा पढिने मन्त्र यिनका लागि प्रयोग गरिँदैन । यस्तो विधान छ ।

**अग्निनैव दहेत् भार्यां स्वतन्त्रा पतिता न चेत् ।**
**तदुत्तरेण पात्राणि दाहयेत् पृथगन्तिके ॥८॥**

यदि तिनी जथाभावी गर्ने र पतिता छैनन् भने पत्नीको दाहसंस्कार अग्निले नै गर्नू । यज्ञका पात्रहरु उत्तरतिर नजिकै छुट्टै जलाउनू ।

**अस्थिसञ्चयन**

**अपरेद्युस्तृतीये वा अस्थ्नां सञ्चयनं भवेत् ।**
**यस्तत्र विधिरादिष्ट ऋषिभिः सोऽधुनोच्यते ॥९॥**

भोलिपल्ट वा तेश्रो दिन अस्थिसञ्चयन गरिन्छ । त्यसको ऋषिहरुले बताएको विधि अब बताइन्छ ।

**स्नानान्तं पूर्ववत् कृत्वा गव्येन पयसा ततः ।**
**सिञ्चेदस्थीनि सर्वाणि प्राचीनावीत्यभाषयन् ॥१०॥**

नुहाउने सम्मका कार्य पहिले बताइए अनुसार गरी अपसव्य भएर शान्त भई सबै अस्थिमा गाईको दूध छर्कनू ।

**शमीपलाशशाखाभ्यामद्धृत्योद्धृत्य भस्मतः ।**
**आज्येनाभ्यज्य गव्येन सेचयेद् गन्धवारिणा ॥११॥**

शमी वा पलाँशका दुई वटा हाँगाले अस्थिलाई खरानीबाट उठाएर गाईको घिउले भिजाई त्यसमाथि सुगन्धित जल छर्कनू ।

**मृत्पात्रसंपुटं कृत्वा सूत्रेण परिवेष्ट्य च ।**
**श्वभ्रं खात्वा शुचौ भूमौ निखनेद्दक्षिणामुखः ॥१२॥**

माटोको भाँडामा भुन्डयाउने बनाई हालेर कपडाले बेरी शुद्ध जमिनमा खाल्टो खनेर दक्षिणतिर फर्की अस्थि गाड्नू ।

**पूरयित्वावटं पङ्कपिण्डशैवालसंयुतम् ।**
**दत्त्वोपरि समं शेषं कुर्यात् पूर्वाह्णकर्मणा ॥१३॥**

लेउ मिसिएको हिलोले खाल्टो पुरेर सम्म पारी बाँकी कर्म पूर्वाह्ण कर्म अनुसार गर्नू ।

**एवमेवागृहीताग्नेः प्रेतस्य विधिरिष्यते ।**
**स्त्रीणामिवाग्निदानं स्यादथातोऽनुक्तमुच्यते ॥१४॥**

अग्न्याधान नगर्नेको दाहसंस्कार पनि यही तरिकाले गर्नू । यिनको चितामा दागबत्ती दिने काम स्त्रीको समान छ । यसपछि केही बाँकी कुरा भन्दछु ।

॥ इति त्रयोविंशः खण्डः ॥२३॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको तेइसौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्टयङ्काः-३५७+१४=३७१
शुरुदेखिको श्लोकसङ्ख्या : ३७१

## ॥ अथ चतुर्विंशः खण्डः ॥
## (चौबिसौं खण्ड)

### । सूतके कर्मत्यागः षोडशश्राद्धविधानवर्णनञ्च ।
### (सूतकमा त्यागिने कर्म र सोह्र श्राद्ध)

**सूतके कर्मणां त्यागः सन्ध्यादीनां विधीयते ।**
**होमः श्रौते तु कर्तव्यः शुष्कान्नेनापि वा फलैः ॥१॥**

सूतकमा सन्ध्या आदि कर्म त्यागको विधान गरिएको छ । यस बेलामा श्रौत-कर्म अनुसारको होम भने सुक्खा अन्न वा फलफूलले गर्नु पर्दछ ।

**अकृतं हावयेत् स्मार्ते तदभावे कृताकृतम् ।**
**कृतं वा हावयेदन्नमन्वारम्भविधानतः ॥२॥**

स्मृति कर्ममा काँचो अन्नको आहुति दिनू । त्यो नभए काँचो-पकाइएको वा पकाइएको अन्नको आहुति पछाडिबाट शुरु गर्ने विधि (अन्वारम्भ) ले दिनू ।

**कृतमोदनसक्त्वादि तण्डुलादि कृताकृताम् ।**
**व्रीह्यादि चाकृतं प्रोक्तमिति हव्यं त्रिधा बुधैः ॥३॥**

भात, सातु आदिलाई पकाइएको, चामल आदिलाई काँचो-पकाइएको र धान आदिलाई काँचो हव्य भनी तीन प्रकारका हव्य विद्वानहरुले बताएका छन् ।

**सूतके च प्रवासेषु चाशक्तौ श्राद्धभोजने ।**
**एवमादिनिमित्तेषु हावयेदिति योजयेत् ॥४॥**

सूतकमा, परदेशमा, कमजोरीमा र श्राद्ध भोजनमा यिनै तीन थरी हव्यले होम गराउने भनी सम्झनु पर्दछ ।

**न त्यजेत् सूतके कर्म ब्रह्मचारी स्वकं क्वचित् ।**
**न दीक्षणात् परं यज्ञे न कृच्छ्रादि तपश्चरन् ॥५॥**

ब्रह्मचारीले कुनै पनि हालतमा सूतकमा आफ्नो कर्म नत्याग्नू । दीक्षा ग्रहण गरेपछि न यज्ञमा न त कृच्छ्र आदि व्रत गर्दा खेरी नै निजकर्म त्याग गर्नु हुन्छ ।

**पितर्य्यपि मृते नैषां दोषो भवति कर्हिचित् ।**
**अशौचं कर्मणोऽन्ते स्यात् त्र्यहं वा ब्रह्मचारिणः ॥६॥**

पिताको मृत्यु हुँदा पनि यिनलाई दोष लाग्दैन । ब्रह्मचारीलाई कर्मको अन्तमा तीन दिन आशौच लाग्दछ ।

**श्राद्धमग्निमतः कार्य्यं दाहादेकादशेऽहनि ।**
**प्रत्याब्दिकं तु कुर्वीत प्रमीताहनि सर्वदा ॥७॥**

अग्निहोत्रीको श्राद्ध लाश जलाएको ११ औं दिनमा गर्नु पर्दछ । प्रतिवर्ष गरिने श्राद्ध मरेका दिनमा गर्नू ।

**द्वादश प्रतिमास्यानि आद्यं षाण्मासिके तथा ।**
**सपिण्डीकरणश्चैव एतद्वै श्राद्धषोडशम् ॥८॥**

प्रत्येक महिनामा गरिने बाह्र श्राद्ध, शुरुमा गरिने एउटा श्राद्ध तथा छ-छ महिनामा गरिने दुई श्राद्ध र सपिण्डीकरण समेत गरी सोह्र वटा श्राद्ध हुन्छन् ।

**एकाहेन तु षण्मासा यदा स्युरपि वा त्रिभिः ।**
**न्यूनाः संवत्सरश्चैव स्यातां षाण्मासिके तथा ॥९॥**

जब छ महिना वा वर्ष दिन पूरा हुन एक दिन वा तीन दिन बाँकी हुन्छ तब षाण्मासिक र वार्षिक श्राद्ध गरिन्छन् ।

**यानि पञ्चदशाद्यानि अपुत्रस्येतराणि तु ।**
**एकस्मिन्नह्नि देयानि सपुत्रस्यैव सर्वदा ॥१०॥**

शुरुका पन्ध्र श्राद्ध पुत्र नहुनेका एकै दिनमा दिइनु पर्दछ । पुत्र हुनेका सधैं अलग-अलग दिइनु पर्दछ ।

**श्राद्धको अधिकार**

**न योषायाः पतिर्दद्यादपुत्राया अपि क्वचित् ।**
**न पुत्रस्य पिता दद्यान्नानुजस्य तथाग्रजः ॥११॥**

पुत्र नहुने स्त्रीलाई कुनै पनि हालतमा पतिले श्राद्ध नदिनू , बाबुले छोरालाई नदिनू र जेठो भाईले कान्छा भाइलाई नदिनू ।

**सपिण्डीकरण आदि**

**एकादशेऽह्नि निर्वर्त्य अर्वाग्दर्शाद् यथाविधि ।**
**प्रकुर्वीताग्निमान् पुत्रो मातापित्रोः सपिण्डताम् ॥१२॥**

एघारौंका दिन औंसी अगाडि विधिपूर्वक कर्म सकेर अग्निहोत्री पुत्रले माता र पिताको सपिण्डीकरण गर्नू ।

**सपिण्डीकरणादूर्ध्वं स दद्यात् प्रतिमासिकम् ।**
**एकोद्दिष्टेन विधिना दद्यादित्याह गौतमः ॥१३॥**

सपिण्डीकरण गरेपछि एकोद्दिष्ट विधिले प्रत्येक महिना दिइने श्राद्ध दिनू भनी गौतम ऋषिले भनेका छन् ।

**कर्षूसमन्वितं मुक्त्वा तथाद्यं श्राद्धषोडशम् ।**
**प्रत्याब्दिकञ्च शेषेषु पिण्डाः स्युः षडिति स्थितिः ॥१४॥**

कर्षू सहित आद्य श्राद्ध, सोह श्राद्ध र प्रतिवर्ष हुने श्राद्धलाई छोडी अरु श्राद्धमा छ पिण्ड हुन्छन्, यही नै मर्यादा हो ।

**अर्घ्येऽक्षय्योदके चैव पिण्डदानेऽवनेजने ।**
**तन्त्रस्य तु निवृत्तिः स्यात् स्वधावाचन एव च ॥१५॥**

अर्घ दान, अक्षय जलदान, पिण्डदान, अवनेजन र स्वधावाचनमा एउटै सङ्कल्प प्रयोग गर्न निषेध छ । (यो श्लोक दोहोरिएको छ, अध्याय चारमा पनि छ) ।

**ब्रह्मदण्डादियुक्तानां येषां नास्त्यग्निसत्क्रिया ।**
**श्राद्धादिसत्क्रियाभाजो न भवन्तीह ते क्वचित् ॥१६॥**

ब्राह्मणका श्राप आदिले युक्त भई जो व्यक्ति अग्निदाह आदि शुभकर्मका अधिकारी हुँदैनन् तिनले कुनै पनि अवस्थामा यस लोकमा श्राद्ध आदि उत्तम कर्मका भाग पाउने हुँदैनन् ।

॥ इति चतुर्विंशः खण्डः ॥२४॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको चौबिसौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-३७१+१६=३८७
शुरुदेखिको श्लोकसङ्ख्या : ३८७

## ॥ अथ पञ्चविंशः खण्डः ॥
## । नवयज्ञेन विना नवान्नभोजने प्रायश्चित्तवर्णनम् ।

**मन्त्राम्नायेऽग्न इत्येतत् पञ्चकं लाघवार्थिभिः ।**
**पठ्यते तत्प्रयोगे स्यान्मन्त्राणामेव विंशतिः ॥१॥**

मन्त्रको सङ्ग्रहमा हलुका चाहने भएका ऋषिहरुले अग्ने इत्यादि जो पाँच मन्त्र पढे, प्रयोग गर्दा खेरी भने ती बीस हुन जान्छन् ।

**अग्नेः स्थाने वायुचन्द्रसूर्य्या बहुवदूह्य च ।**
**समस्य पञ्चमीसूत्रे चतुश्चतुरिति श्रुतेः ॥२॥**

अग्निका स्थानमा वायु, चन्द्र र सूर्यको अनेक प्रकारले तर्क गरेर तथा यी चार-चार लाई पाँच मन्त्रका साथ सूत्रमा राखेर कुल बीस मन्त्र हुन जान्छ भन्ने श्रुतिको तात्पर्य हो ।

**प्रथमे पञ्चके पापी लक्ष्मीरिति पदं भवेत् ।**
**अपि पञ्चसु मन्त्रेषु इति यज्ञविदो विदुः ॥३॥**

प्रथम पाँच मन्त्रमा "पापी लक्ष्मीः" भन्ने पद हुन्छ भन्ने कुरा यज्ञ जान्ने सबैले जान्दछन् ।

**द्वितीये तु पतिघ्नी स्यादपुत्रेति तृतीयके ।**
**चतुर्थे त्वपसव्येति इदमाहुतिविंशकम् ॥४॥**

दोश्रो पाँच मन्त्रमा "पतिघ्नी" पद हुन्छ, तेश्रो पाँच मा "अपुत्रा" पद र चौथो पाँच मा "अपसव्या" पद हुन्छ । यसरी बीस आहुति हुन्छन् ।

**धृतिहोमे न प्रयुञ्ज्याद् गोनामसु तथाष्टसु ।**
**चतुर्थ्यामधन्य इत्येतद् गोनामसु हि हूयते ॥५॥**

धृति-होममा तथा गो-नाम आहुतिमा चतुर्थी विभक्तिको प्रयोग नगर । गो-नाम आहुतिमा “अघ्न्ये” भनी आहुती हालिन्छ ।

**लताग्रपल्लवो बुध्नः शुङ्गेति परिकीर्त्यते ।**
**पतिव्रता व्रतव्रती ब्रह्मबन्धुस्तथाऽश्रुतः ॥६॥**

लहराको टुप्पोमा रहेको पालुवालाई “शुङ्गा” भनिन्छ । पतिव्रता “व्रतव्रती” भनिन्छे । वेद नपढेको ब्राह्मण ‘ब्रह्मबन्धु’ कहिन्छ ।

**शिलाटु नीलमित्युक्तं ग्रथ्नः स्तबक उच्यते ।**
**कपुष्णिकाभितःकेशान् मर्ध्नि पश्चात् कपुच्छलम् ॥७॥**

काँचो फललाई “नील” र गुच्छालाई “ग्रथ्न” भनिन्छ । टाउकाको चारैतिर रहेका केशलाई “कपुष्णिका” र पछिल्तिर पुच्छर जसरी झुण्डिएका केशलाई “कपुच्छल” भनिन्छ ।

**श्वाविच्छलाका शलली तथा वीरतरः शरः ।**
**तिलतण्डुलसम्पक्वः कृसरः सोऽभिधीयते ॥८॥**

दुम्सीलाई ‘शलाका’ वा ‘शलली’ र वाणलाई “वीरतर” भनिन्छ । तिल चामल हाली पकाइएको भोजनलाई ‘कृसर’ भनिन्छ ।

**नामधेये मुनिवसुपिशाचा बहुवत् सदा ।**
**यक्षाश्च पितरो देवा यष्टव्यास्तिथिदेवताः ॥९॥**

न्वारानमा मुनि, वसु, पिशाच, यक्ष, पितृ, देवता र अतिथिलाई बहुवचन बोली पूजा गर्नू ।

**आग्नेयाद्येऽथ सार्पाद्ये विशाखाद्ये तथैव च ।**
**आषाढाद्ये धनिष्ठाद्ये अश्विनाद्ये तथैव च ॥१०॥**
**द्वन्द्वान्येतानि बहुवदृक्षाणां जुहुयात् सदा ।**
**द्वन्द्वद्वयं द्विवच्छेषमवशिष्टान्यथैकवत् ॥११॥**

कृत्तिका आदि, अश्लेषा आदि, विशाखा आदि, आषाढा आदि, धनिष्ठा आदि र अश्विनी आदि नक्षत्रलाई “समास नक्षत्र” हुनाले गर्दा सधैं बहुवचन प्रयोग गरी होम गर्नु पर्दछ । बाँकी दुई समास गरिएका नक्षत्रलाई द्विवचनले र अरुलाई एकवचनले होम गर्नू ।

**देवतास्वपि हूयन्ते बहुवत् सर्पवस्वपः ।**
**देवाश्च पितरश्चैव द्विवदेवाश्विनौ सदा ॥१२॥**

देवतामा पनि सर्प, वायु, जल, विश्वेदेवा र पितृलाई बहुवचनमा आहुति दिइन्छ भने अश्विनी देवतालाई सधैं द्विवचनमा दिइन्छ ।

## ब्रह्मचर्य धर्म

**ब्रह्मचारी समादिष्टो गुरुणा व्रतकर्मणि ।**
**बाढमोमिति वा ब्रूयात्तत्तथैवानुपालयेत् ॥१३॥**

गुरुले व्रत गर्न आदेश दिएका ब्रह्मचारीले 'बाढम्' वा 'ॐ' भनी स्वीकार गर्नू र आज्ञाको पालना गर्नू ।

**सशिखं वपनं कार्यमास्नास्नाद् ब्रह्मचारिणा ।**
**आशरीरविमोक्षाय ब्रह्मचर्यं न चेद्भवेत् ॥१४॥**

आजीवन ब्रह्मचर्यमा रहन नसके ब्रह्मचारीले अन्तिम स्नानसम्म टुपी बाहेक कपाल मुण्डन गराउनु पर्दछ ।

**न गात्रोत्सादनं कुर्यादनापदि कदाचन ।**
**जलक्रीडामलङ्कारान् व्रती दण्ड इवाप्लवेत् ॥१५॥**

आपदमा बाहेक शरीरमा सुगन्ध नदल्नू, जलक्रीडा नगर्नू र आभूषण नलगाउनू । व्रतको पालना गर्दै दण्डसमान नुहाउनू ।

**देवतानां विपर्यास जुहोतिषु कथं भवेत् ।**
**सर्वप्रायश्चितं हुत्वा क्रमेण जुहुयात् पुनः ॥१६॥**

होम गर्दा देवताको क्रम उल्टो परे के गर्ने ? प्रायश्चितका सबै आहुति दिएर पुनः क्रमैले होम गर्नू ।

**संस्कारा अतिपद्येरन् स्वकालाच्चेत् कथञ्चन ।**
**हुत्वैतदेव कर्तव्या ये तूपनयनादधः ॥१७॥**

यदि उपनयनभन्दा अघि गर्नुपर्ने संस्कार कुनै कारणले समयमा गरिएन भने प्रायश्चित होम गरेर मात्र ती संस्कार गरिनु पर्दछ ।

**अनिष्ट्वा नवयज्ञेन नवान्नं योऽत्त्यकामतः ।**
**वैश्वानरश्चरुस्तस्य प्रायश्चित्तं विधीयते ॥१८॥**

जो मानिस याँ अन्न होम नगरी खान्छ उसले वैश्वानर चरु होम गरी प्रायश्चित गर्ने विधान छ ।

॥ इति पञ्चविंशः खण्डः ॥२५॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको पच्चिसौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्ट्यङ्काः-३८७+१८=४०५
शुरुदेखिको श्लोकसङ्ख्या : ४०५

## ॥ अथ षड्विंशः खण्डः ॥
## । नवयज्ञकालाभिधानवर्णनम् ।

**चरुः समशनीयो यस्तथा गोयज्ञकर्मणि ।**
**वृषभोत्सर्ज्जने चैव अश्वयज्ञे तथैव च ॥१॥**
**श्रावण्यां वा प्रदोषे यः कृष्यारम्भे तथैव च ।**
**कथमेतेषु निर्वापाः कथञ्चैव जुहोतयः ॥२॥**

मिलाएर खान मिल्ने चरु त्यो गोयज्ञमा, वृषोत्सर्गमा, अश्वमेधमा, प्रदोषमा र कृषिकर्मको आरम्भमा कसरी यज्ञ (दान) मार्फत शुद्ध पारी खान हुन्छ त्यसका बारेमा म बताउदँछु ।

**देवतासङ्ख्यया ग्राह्या निर्व्वापास्तु पृथक् पृथक् ।**
**तूष्णीं द्विरेव गृह्णीयाद्धोमश्चापि पृथक् पृथक् ॥३॥**

होम हालिने (वा दान गरने) देवताको संख्या अनुसार बेग्लाबेग्लै चरु लिई तिनलाई आहूति हालिनु पर्दछ र होम पनि चूपचाप मन्त्र उच्चारण नगरी बेग्लाबेग्लै हालिनु पर्दछ ।

**यावता होमनिर्वृत्तिर्भवेद्या यत्र कीर्तिता ।**
**शेषं चैव भवेत् किञ्चित्तान्तं निर्वपेच्चरुम् ॥४॥**

जे तरिका जहाँ विधान गरिएको हुन्छ त्यस अनुसार चाहिनेभन्दा केही बढी चरु बनाउनू ।

**चरौ समशनीये तु पितृयज्ञे चरौ तथा ।**
**होतव्यं मेक्षणेनान्य उपस्तीर्णाभिघारितम् ॥५॥**

मिलेर खानयोग्य तथा पितृयज्ञको चरुमा काठको चम्चाले होम गर्नू । अन्यका मतमा फिँजाएर घिउ छरेको चरुको होम हाल्नू ।

**कालः कात्यायनेनोक्तो विधिश्चैव समासतः ।**
**वृषोत्सर्गे यतो नाऽत्र गोभिलेन तु भाषितः ॥६॥**

वृषोत्सर्गको विधि र समयका बारेमा कात्यायनबाट संक्षेपमा जानकारी दिइएको छ किन कि यस बारेमा गोभिलले केही पनि बताएका छैनन् ।

**पारिभाषिक एव स्यात् कालो गोवाजियज्ञयोः ।**
**अन्यस्मादुपदेशात्तु स्वस्तरारोहणस्य च ॥७॥**

गो र अश्व यज्ञको समय पारम्परिक हुन्छ । अरु ऋषिले बताएका विधान अनुसार आफैं ओछ्याइएका कुश माथि आरोहणको विधि पनि यही हो ।

**अथवा मार्गपाल्येऽह्नि कालो गोयज्ञकर्मणः ।**
**निराजनेऽह्नि वाश्वानामिति तन्त्रान्तरे विधिः ॥८॥**

अथवा गोपाली (मार्गरक्षक देवी) को पूजा गर्ने दिन गोयज्ञ कर्म गर्ने दिन हुन्छ । अनि शरद् ऋतुमा राजाहरूले आफ्नो विजय यात्राको कामना गर्दै गरिने हतियार पूजा र अश्व निराजन गर्ने दिन अश्व यज्ञ गर्नु पर्दछ । अन्य स्मृतिमा यहि विधि बताइएको छ ।

**शरद्वसन्तयोः केचिन्नवयज्ञं प्रचक्षते ।**
**धान्यपाकवशादन्ये श्यामाको वनिनः स्मृतः ॥९॥**

कसैले शरद र वसन्तमा त कसैले धान पाक्ने बेला नवयज्ञको विधान गरेका छन् । सामा धान वानप्रस्थीको भोजन मानिएकोले यही पाक्ने बेला नवयज्ञ गर्नू ।

**आश्वयुज्यां तथा कृष्यां वास्तुकर्मणि याज्ञिकाः ।**
**यज्ञार्थतत्त्ववेत्तारो होममेवं प्रचक्षते ॥१०॥**

यज्ञविदहरु आश्वयुजी पूर्णिमामा कृषि तथा वास्तुकर्मको यसरी नै होमको विधि गर्दछन् ।

**द्वे पञ्च द्वे क्रमेणैतां हविराहुतयः स्मृताः ।**
**शेषा आज्येन होतव्या इति कात्यायनोऽब्रवीत् ॥११॥**

क्रमैले दुई, पाँच र दुई हव्यको आहुति मानिएको छ । बाँकी आहुति घिउले दिनु पर्दछ । यस्तो कात्यायनले भनेका छन् ।

**पयो यदाज्यसंयुक्तं तत् पृषातकमुच्यते ।**
**दध्येके तदुपासाद्य कर्तव्यः पायसश्चरुः ॥१२॥**

घिउ मिसिएको दूधलाई पृषातक भनिन्छ । कसै कसैको विचारमा यही पृषातक मिलाएर चरु बनाउनु पर्दछ ।

**व्रीहयः शालयो मुद्गा गोधूमाः सर्षपास्तिलाः ।**
**यवाश्चौषधयः सप्त विपदं घ्नन्ति धारिताः ॥१३॥**

व्रीहि, शालि, मुगी, गहुँ, सरस्यूँ, तिल र जौ यि सात औषधीहरु (होममा) प्रयोग गर्नाले विपद्‌को नाश हुन्छ ।

**संस्काराः पुरुषस्यैते स्मर्य्यन्ते गौतमादिभिः ।**
**अतोऽष्टकादयः कार्याः सर्वे कालक्रमोदिताः ॥१४॥**

गौतम आदि ऋषिले पुरुषका यिनै संस्कार बताएका छन् । यसैले समय अनुसार बताइएका अष्टका आदि सबै कर्म गर्नु पर्दछ ।

**सकृदप्यष्टकादीनि कुर्यात् कर्माणि यो द्विजः ।**
**स पङ्क्तिपावनो भूत्वा लोकान् प्रैति घृतश्च्युतः ॥१५॥**

जो द्विजले एकपटक मात्र पनि अष्टका आदि कर्म गर्दछ, उसले आफ्नो पङ्क्तिलाई पवित्र पार्दछ र घिउले सिञ्चित भएको लोकमा जान पाउँदछ ।

**एकाहमपि कर्मस्थो योऽग्निशुश्रूषकः शुचिः ।**
**नयत्यत्र तदेवास्य शताहं दिवि जायते ॥१६॥**

अग्निको सेवा गर्ने भएको मानिस पवित्र भई यस लोकमा एक दिन मात्र पनि कर्ममा लाग्दछ भने उसका लागि त्यो एक दिन स्वर्गलोकको सय दिन बराबर हुन पुग्दछ ।

**यस्त्वाधायाग्निमाशास्य देवादीन्नैभिरिष्टिवान् ।**
**निराकर्तामरादीनां स विज्ञेयो निराकृतिः ॥१७॥**

जो मानिस अग्निको आधान गरेर पनि देवता आदिलाई लोभ्याएर तिनलाई होम गर्दैन, देवनिषेधक त्यस्ता मानिसलाई निन्दनीय भनी जान्नू ।

॥ इति षड्विंशः खण्डः ॥२६॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको छब्बिसौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-४०५+१७=४२२
शुरुदेखिको श्लोकसङ्ख्या : ४२२



## ॥ अथ सप्तविंशः खण्डः ॥

## (सत्ताइसौं खण्ड)

## । अथ प्रायश्चित्तवर्णनम् ।
## (प्रायश्चित)

### अन्वाहार्य श्राद्ध

**यच्छ्राद्धं कर्मणामादौ या चान्ते दक्षिणा भवेत् ।**
**आमावस्यां द्वितीयं यदन्वाहार्य्यं तदुच्यते ॥१॥**

कुनै कर्मको शुरुमा श्राद्ध जुन गरिन्छ र अन्तमा दक्षिणा जे दिइन्छ, औंसीमा जुन दोश्रो श्राद्ध हुन्छ त्यसलाई अन्वाहार्य भनिन्छ ।

### परिसमूहन

**एकसाध्येष्ववर्हिःषु न स्यात् परिसमूहनम् ।**
**नोदगासादनञ्चैव क्षिप्रहोमा हि ते मताः ॥२॥**

एक दिनमै सिद्धिने र कुशले ढाक्ने नगरी गरिने होममा परिसमूहन हुँदैन, जल पनि राख्नु पर्दैन किनकि यसलाई शिघ्रहोम मानिएको छ ।

### होमका अन्न

**अभावे ब्रीहियवयोर्दध्ना वा पयसापि वा ।**
**तदभावे यवाग्वा वा जुहुयादुदकेन वा ॥३॥**

साठी दिनमा पाक्ने धान र जौको अभावमा दही वा दूधले तथा त्यसको पनि अभावमा खिचडी (जाउलो) वा जलले होम गर्नू ।

### मन्त्र उच्चारण कर्म विशेष

**रौद्रन्तु राक्षसं पित्र्यमासुरं चाभिचारिकम् ।**
**उक्त्वा मन्त्रं स्पृशेदप आलभ्यात्मानमेव च ॥४॥**

रुद्र, राक्षस, पितृ, असुर र हिंसा वा मारणादि मन्त्रको उच्चारण गरेपछि आफूले आफैलाई छोई आचमन गर्नू ।

## यज्ञ पछिका केही नियम

यजनीयेऽह्नि सोमश्चेद्वारुण्यां दिशि दृश्यते ।
तत्र व्याहृतिभिर्हुत्वा दण्डं दद्याद् द्विजातये ॥५॥

यज्ञ गरेका दिनमा यदि चन्द्रमा पश्चिममा देखिए भने व्याहृतिले आहुति हालेर ब्राह्मणलाई लौरो दिनू ।

लवणं मधु मांसञ्च क्षारांशो येन हूयते ।
उपवासे न भुञ्जीत नोरु रात्रौ न किञ्चन ॥६॥

नुन, मह, मासु र क्षारको केही अंश जसबाट होमिन्छ, त्यसले उपवासमा केही नखानू र रातमा पनि बढी नखानू ।

## सन्ध्याकालीन होम

स्वकाले सायमाहुत्या अप्राप्तौ होतृहव्ययोः ।
प्राक्प्रातराहुतेः कालः प्रायश्चित्ते हुते सति ॥७॥

सन्ध्याकालको होम गर्ने बेलामा होता र हव्य नभेटिए भोलिपल्ट पहिले प्रायश्चित आहुति दिएर मात्र बिहानको होम गर्ने समय हुन्छ ।

## प्रायश्चित होमका लाभ

प्राक् सायमाहुतेः प्रातर्होमकालानतिक्रमः ।
प्राक् पौर्णमासाद् दर्शस्य प्राग्दर्शादितरस्य तु ॥८॥

प्रायश्चित होम गर्नाले साँझको आहुति अघिको बिहानीको होम गर्ने समयको अतिक्रमण हुँदैन, पूर्णिमा अघि औंसीको तथा औंसी अघि पूर्णिमाको होमको पनि अतिक्रमण हुँदैन ।

## होम गर्न छुटेकोमा प्रायश्चित

वैश्वेवे त्वतिक्रान्ते अहोरात्रमभोजनम् ।
प्रायश्चित्तमथो हुत्वा पुनः सन्तनुयाद् व्रतम् ॥९॥

वैश्वदेव होम छुटे एक दिनरात नखानू । त्यसपछि प्रायश्चित होम गरेर पुनः वैश्वदेव होमको व्रत शुरु गर्नू ।

होमद्वयात्यये दर्शपौर्णमासात्यये तथा ।
पुनरेवाग्निमादध्यादिति भार्गवशासनम् ॥१०॥

बिहान बेलुकीको तथा औंसी र पूर्णिमाको होम छुटे फेरी अग्निको आधान गर्नू, यस्तो भार्गव ऋषिको आदेश छ ।

## केही शब्दार्थ

**अनृचो माणवो ज्ञेय एणः कृष्णमृगः स्मृतः ।**
**रुरुर्गौरमृगः प्रोक्तस्तम्बलः शोण उच्यते ॥११॥**

ऋचाले हीन मानिस तुच्छ मानिन्छ । कालो मृगलाई एण भनिन्छ, गोरो मृगलाई रुरु र रातो मृगलाई तम्बल भनिन्छ ।

## व्रतबन्धमा वटुकले प्रयोग गर्ने लौरो

**केशान्तिको ब्राह्मणस्य दण्डः कार्यः प्रमाणतः ।**
**ललाटसम्मितो राज्ञःस्यात्तु नासान्तिको विशः ॥१२॥**

दण्डको लम्बाई क्रमशः गोडादेखि कपालसम्म, निदारसम्म र नाकसम्म पुग्ने हुनुपर्दछ ।

**ऋजवस्ते तु सर्वे स्युरव्रणाः सौम्यदर्शनाः ।**
**अनुद्वेगकरा नृणां सत्वचोऽनग्निदूषिताः ॥१३॥**

दण्ड बाङ्गोटिङ्गो नभई सिधा हुनुपर्दछ, दण्डमा गाँठागुँठी हुनुहुँदैन, हेर्नमा सुन्दर हुनुपर्दछ, उद्वेग-भय-ग्लानी-दुःख उत्पन्न गर्ने हुनु हुँदैन, बोक्रो ताछिएको र आगोले पोलेको हुनु हुँदैन ।

## गोदान

**गौर्विशिष्टतमा विप्रैर्वेदेष्वपि निगद्यते ।**
**न ततोऽन्यद्वरं यस्मात्तस्माद् गौर्वर उच्यते ॥१४॥**

वेदमा पनि ऋषिहरुले गाईलाई विशिष्ट भनेका छन् । गाईभन्दा उत्तम केही कुरा नभएकाले गाईलाई वर भनिएको छ ।

**येषां व्रतानामन्तेषु दक्षिणा न विधीयते ।**
**वरस्तत्र भवेद्दानमपि वाच्छादयेद् गुरुम् ॥१५॥**

जुन व्रतको अन्तिममा दक्षिणाको विधान गरिएको हुँदैन त्यसमा गोदान गर्नु पर्दछ अथवा गुरुलाई वस्त्र ओढाउनु पर्दछ ।

## वेदाध्ययन

**अस्थानोच्छ्वासविच्छेदघोषणाध्यापनादिकम् ।**
**प्रमादिकं श्रुतौ यत् स्याद्यातयामत्वकारि तत् ॥१६॥**

पाठ गर्दा अस्थानबाट, लामो सासले, रोकिएर तथा घोषणा र अध्यापन आदिमा प्रमादको उच्चारण वेद पाठको प्रगतिको वाधक हुन्छ ।

**प्रत्यब्दं यदुपाकर्म सोत्सर्गं विधिवद् द्विजैः ।**
**क्रियते छन्दसां तेन पुनरप्यायनं भवेत् ॥१७॥**

द्विजले प्रतिवर्ष विधिपूर्वक दान सहित गर्ने वेदपाठले मन्त्रको पुनः आपूर्ति हुन्छ ।

**अयातयामैश्छन्दोभिर्यत् कर्म क्रियते द्विजैः ।**
**क्रीडमानैरपि सदा तत्तेषां सिद्धिकारकम् ॥१८॥**

द्विजबाट आयातयाम मन्त्रको क्रिडामात्रले पनि जुन कर्म गरिन्छ त्यो सिद्धिदायक हुन्छ ।

## वेद अध्यापन आदि

**गायत्रीञ्च सगायत्रां बार्हस्पत्यमिति त्रिकम् ।**
**शिष्येभ्योऽनूच्य विधिवदुपाकुर्यात्ततः श्रुतिम् ॥१९॥**

गायत्र सहित गायत्री र बार्हस्पत्य समेत तीन कुरा शिष्यलाई पढाएर त्यसपछि वेद विधिपूर्वक पढाउनू ।

**छन्दसामेकविंशानां संहितायां यथाक्रमम् ।**
**तच्छन्दस्काभिरेवग्भिर्राद्याभिर्होम इष्यते ॥२०॥**

संहितामा क्रमैले एक्काइस छन्द छन् । यी छन्द भएका शुरुका ऋचाले होम गरिनु पर्दछ ।

**पर्वभिश्चैव गानेषु ब्राह्मणेषूत्तरादिभिः ।**
**अङ्गेषु चर्चामन्त्रेषु इति षष्टिर्जुहोतयः ॥२१॥**

पर्व सहित सामवेद गाउँदा, उत्तर अंश सहित ब्राह्मणमा, अङ्गमा र चर्चा मन्त्रमा साठी आहुति बताइएको छ ।

॥ इति सप्तविंशः खण्डः ॥२७॥

॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको सत्ताइसौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्ट्यङ्काः-४२२+२१=४४३
शुरुदेखिको श्लोकसङ्ख्या : ४४३



## ॥ अथाष्टविंशः खण्डः ॥
## (अठ्ठइसौँ खण्ड)

### । अथ प्रायश्चित्तवर्णनमुपाकर्मणः फलनिरूवर्णनम् ।

### प्रायश्चित र उपाकर्म

**अक्षतास्तु यवाः प्रोक्ता भृष्टा धाना भवन्ति ते ।**
**भृष्टास्तु व्रीहयो लाजा घटाः स्वाण्डिक उच्यते ॥१॥**

जौलाई अक्षता, भुटेको जौलाई धान, भुटेको धानलाई लाजा र बोक्रा निकालेको जौलाई स्वाण्डिक भनिन्छ ।

**नाधीयीत रहस्यानि सोत्तराणि विचक्षणः ।**
**न चोपनिषदश्चैव षण्मासान् दक्षिणायनात्॥२॥**

दक्षिणायण शुरु भएदेखि पाँच महिनासम्म विद्वानले उत्तर अंश सहित आरण्यक तथा उपनिषद नपढ्नू ।

**उपाकृत्योदगयने ततोऽधीयीत धर्मवित् ।**
**उत्सर्गश्चैक एवैषां तैष्यां प्रौष्ठपदेऽपि वा॥३॥**

उत्तरायणमा उपाकर्म गरेर त्यसपछि धर्मज्ञले वेद पढ्नू । वेदको समापन पनि एउटै पौषमा वा भाद्र पूर्णिमामा हुन्छ ।

**अजातव्यञ्जना लोम्नी न तया सह संविशेत् ।**
**अयुगूः काकबन्ध्याया जातां तां न विवाहयेत् ॥४॥**

यौवनका चिह्न अनुत्पन्न र लामा रौंकीलाई सम्भोग नगर्नू । काकवन्ध्या (एक्लो सन्तान जन्माउने स्त्री) बाट उत्पन्न एक्ली कन्या (अयुगूः) सँग विवाह नगर्नू ।

**संसक्तपदविन्यासस्त्रिपदः प्रक्रमः स्मृतः ।**

**स्मार्त्ते कर्मणि सर्वत्र श्रौत्रे त्वध्वर्युणोदितः ॥५॥**

मिलाएर राखिएका तीन पदको बनावटलाई प्रक्रम भनिन्छ । स्मार्त्त कर्ममा सर्वत्र होता हुन्छ । श्रौतकर्ममा जहाँ अध्वर्यु भनिएको हुन्छ त्यहाँ होता हुन्छ ।

**यस्यां दिशि बलिं दद्यात्तामेवाभिमुखो बलिम् ।**
**श्रवणाकर्मणि भवेन्नयञ्च कर्मं न सर्वदा ॥६॥**

जुन दिशामा बलि दिइन्छ त्यतै फर्केर श्रावणीकर्ममा पनि सधैं बलि दिनुपर्ने हुन्छ, उधमुन्टो लगाएर दिनु हुँदैन ।

**बलिशेषस्य हवनमग्निप्रणयनन्तथा ।**
**प्रत्यहं न भवेयातामुल्मुकन्तु भवेत् सदा ॥७॥**

बलिशेषको हवन र अग्निको प्रार्थना दिनहुँ हुँदैन । आगोको फिलिङ्गो त सधैं हुन्छ ।

**पृषातकप्रेषणयोर्नवस्य हविषस्तथा ।**
**शिष्टस्य प्राशने मन्त्रस्तत्र सर्वेऽधिकारिणः ॥८॥**

घिउ मिसिएको दूधको, प्रेषणमा, नयाँ हविमा र शिष्टका प्राशनमा जुन मन्त्र हुन्छन्, त्यसमा सबै अधिकारी हुन्छन् ।

**ब्राह्मणानामसान्निध्ये स्वयमेव पृषातकम् ।**
**अवेक्षेद्धविषः शेषं नवयज्ञेऽपि भक्षयेत् ॥९॥**

ब्राह्मण नजिकै नभए जजमान स्वयं घिउ मिसिएको दूधलाई हेरोस् तथा हवि गरी बचेको कुरो नवयज्ञमा पनि खाओस् ।

**सफला बदरीशाखा फलवत्यभिधीयते ।**
**घना विसिकताशङ्काः स्मृता जातशिलास्तु ताः ॥१०॥**

फल फलेका बयरको हाँगालाई फलवती भनिन्छ । बाक्लो, बालुवा र सन्देह रहित जे हुन्छ त्यसलाई जातशिला भनिन्छ ।

**नष्टो विनष्टो मणिकः शिलानाशे तथैव च ।**
**तदैवाऽऽहृत्य संस्कार्यो न क्षिपेदाग्रहायणीम् ॥११॥**

शिला पनि नष्ट हुँदा वा भाँडो फुटे त्यसैलाई लेराई संस्कार गर्नु पर्दछ, आग्रहायणीको प्रतीक्षा नगर्नू ।

**श्रवणाकर्म लुप्तश्चेत् कथञ्चित् सूतकादिना ।**
**आग्रहायणिकं कुर्याद्बलिवर्जमशेषतः ॥१२॥**

सूतक आदिले गर्दा श्रावणीकर्म छुट्न गएमा बलि बाहेकका आग्रहायणी कर्म सबै गर्नू ।

**ऊद्ध्र्वं स्वस्तरशायी स्यान्मासमर्द्धमथापि वा ।**
**सप्तरात्रं त्रिरात्रं वा एकां वा सद्य एव वा ॥१३॥**

त्यसपछि आफैंले बनाएको कुशको ओछ्यानमा एक महिना, पन्ध्र दिन, सात रात, तीन रात, एक रात वा केही छिन भएपनि सुत्नु ।

**नोद्ध्र्वं मन्त्रप्रयोगः स्यान्नाग्न्यागारं नियम्यते ।**
**नाहतास्तरणश्चैव न पार्श्वश्चापि दक्षिणम् ॥१४॥**

यसपछि न मन्त्रको प्रयोग हुन्छ न त अग्न्यागारको नियम हुन्छ । न नयाँ बिछयौना न त दक्षिणको विधान छ ।

**दृढश्चेदाग्रहायण्यामावेत्तावपि कर्मणः ।**
**कुम्भौ मन्त्रवदासिञ्चेत् प्रतिकुम्भमृचं पठेत् ॥१५॥**

मनुष्य स्वस्थ भए आग्रहायणी कर्म सकेर पनि दुई घडालाई मन्त्रले सेचन गर्नू र प्रत्येक घडालाई सेचन गर्दा मन्त्र पढ्नू ।

**अल्पानां योविघातः स्यात् स बाधो बहुभिः स्मृतः ।**
**प्राणसम्मित इत्यादि वासिष्ठं बाधितं यथा ॥१६॥**

सानातिना कर्मको नाशलाई धेरै ऋषिहरुले बाध भनेका छन् । प्राणसम्मित आदिलाई वसिष्ठले बाधित भनेका छन् ।

**विरोधो यत्र वाक्यानां प्रमाण्यां तत्र भूयसाम् ।**
**तुल्यप्रमाणकत्वे तु न्याय एवं प्रकीर्तितः ॥१७॥**

वचनमा विरोधाभास हुने ठाउँमा धेरै ऋषिले भनेकोलाई प्रमाण मान्नू । बराबर प्रमाणमा न्यायसङ्गत वचनको नै प्रामाणिकता हुन्छ ।

**त्रैयम्बकं करतलमपूपा मण्डकाः स्मृताः ।**
**पलाशा गोलकाश्चैव लोहचूर्णञ्च चीवरम् ॥१८॥**

करतललाई त्रैयम्बक, पूवा-अपुङ्गो वा मालपूवालाई मण्डक, गोलकलाई पलाश र फलामको धूलोलाई चीवर भनिन्छ ।

**स्पृशन्ननामिकाग्रेण क्वचिदालोकयन्नपि ।**
**अनुमन्त्रणीयं सर्वत्र सदैवमनुमन्त्रयेत् ॥१९॥**

(यिनलाई कतै) साँहिली औंलाको टुप्पोले छुनु र कतै हेर्दा पनि जहिले पनि मन्त्र जप गर्नू । सधैं यसरी नै मन्त्रको पाठ गर्नु पर्दछ ।

॥ इत्यअष्टाविंशः खण्डः ॥२८॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको अठ्ठाइसौं खण्डको नेपाली भावानुवाद सकियो ॥

आदितः श्लोकानां समष्टयङ्काः-४४३+१९=४६२
शुरुदेखिको श्लोकसङ्ख्या : ४६२

## ॥ अथैकोनत्रिंशः खण्डः ॥
## (उनन्तिसौं खण्ड)
## । अथ श्राद्धवर्णनम् ।

### पशुबलि एवं विकल्प (श्राद्ध विशेष) आदि

**क्षालनं दर्भकूर्चेन सर्वत्र स्रोतसां पशोः ।**
**तूष्णीमिच्छाक्रमेण स्याद्वसार्थे पार्णदारुणी ॥१॥**

पशुका शरीरका छिद्रलाई कुशको कुचोले मन्त्र नपढी स्वेच्छाको क्रमले धुनू । बोसोको लागि पातले बनेका दुई भाँडा हुन्छन् ।

**सप्त तावन्मूर्द्धन्यानि तथा स्तनचतुष्टयम् ।**
**नाभिः श्रोणिरपानञ्च गोस्रोतांसि चतुर्द्दश ॥२॥**

गाईका टाउकोमा सात (दुई आँखा, दुई कान, दुई नाक र एक मुख), चार थुन, नाइटो, योनी र गुदा गरी चौध छिद्र हुन्छन् ।

**क्षुरो मांसावदानार्थः कृत्स्ना स्विष्टकृदावृता ।**
**वपामादाय जुहुयात्तत्र मन्त्रं समापयेत् ॥३॥**

मांसको शुभ प्रयोगका लागि छुरा हुन्छ । सबै बोसोलाई स्विष्टकृतको विधिले होम गर्नू र त्यही मन्त्रले समापन गर्नू ।

**हृज्जिह्वा क्रोडमस्थीनि यकृद् वृक्कौ गुदं स्तनाः ।**
**श्रोणिस्कन्धसटापार्श्वे पश्वङ्गानि प्रचक्षते ॥४॥**

हृदय, जिब्रो, छाती, तिघ्रा, कलेजो, मिर्गौला, थुन, कम्मर, काँध र याल-यी पशुका अङ्ग भनिन्छन् ।

**एकादशानामङ्गानामवदानानि सङ्ख्यया ।**
**पार्श्वस्य वृक्कस्वक्थ्नोश्च द्वित्वादाहुश्चतुर्दश ॥५॥**

एघार अङ्गको गन्तिमा पार्श्व, चाक, र तिघ्रा दुई-दुई हुनाले गर्दा चौध बताइएको छ ।

**चरितार्था श्रुतिः कार्या यस्मादप्यनुकल्पतः ।**
**अतो ह्यार्चेन होमः स्याच्छागपक्षे चरावपि ॥६॥**

प्रत्येक कल्प अनुसार श्रुतिको चरितार्थ गर्नुपर्ने हुनाले बोकाको यज्ञमा पनि चरुमा आठ ऋचाले होम हुन्छ ।

**अवदानानि यावन्ति क्रियेरन् प्रस्तरे पशोः ।**
**तावतः पायसान् पिण्डान् पश्वभावेऽपि कारयेत् ॥७॥**

पशुको वेदीमा जति वटा शुभ कर्म गरिने हो, पशु नभेटिए त्यति नै वटा खीरका पिण्ड राख्न लगाउनू ।

**औदनव्यञ्जनार्थन्तु पश्वभावेऽपि पायसम् ।**
**सद्रवं श्रपयेत्तद्वदन्वष्टक्येऽपि कर्मणि ॥८॥**

पशुको अभावमा भातले बनाइएका व्यञ्जनका स्थानमा खीरको विधान छ । यसै गरी अन्वष्टक कर्ममा पनि । तर अन्वष्टकमा यसलाई पातलो गरी पकाउनु पर्दछ ।

**प्राधान्यं पिण्डदानस्य केचिदाहुर्मनीषिणः ।**
**गयादौ पिण्डमात्रस्य दीयमानत्वदर्शनात् ॥९॥**

गया आदि गरिएका तीर्थमा पिण्ड मात्र दिइने विधिका कारण केही विद्वान् पिण्डदानलाई नै प्रमुख कुरा मान्दछन् ।

**भोजनस्य प्रधानत्वं वदन्त्यन्ये महर्षयः ।**
**ब्राह्मणस्य परीक्षायां महायत्नप्रदर्शनात् ॥१०॥**

ब्राह्मणको परीक्षा गर्न ठूलो प्रयाश गरिने हुनाले अन्य महर्षिजन भोजनलाई प्रमुख कुरा मान्दछन् ।

**आमश्राद्धविधानस्य विना पिण्डैः क्रियाविधिः ।**
**तदालभ्याप्यनध्यायविधानश्रवणादपि ॥११॥**

हुन त त्यस्तो (चोखो) र भनेजस्तो ब्राह्मण भेटिँदा पनि अनध्यायका कुरा सुनिने गर्दछ । यसैले काँचो अन्नले दिइने श्राद्धको कर्मविधि पिण्डबिना नै भनी जान्नू ।

**विद्वन्मतमुपादाय ममाप्येतद्धृतिस्थितम् ।**
**प्राधान्यमुभयोर्यस्मात्तस्मादेष समुच्चयः ॥१२॥**

विद्वानका विचार मात्र होइन मेरो मनमा पनि यही सोच छ यस्तो विचार गरी दुवैका मत प्रधान भएका कारण यो समग्र विचार हो (दुवै मत मान्य) भनी जान्नू ।

**प्राचीनावीतिना कार्यं पित्र्येषु प्रोक्षणं पशोः ।**
**दक्षिणोद्वासनान्तञ्च चरोर्निर्वपणादिकम् ॥१३॥**
पितृका कर्ममा पशुलाई जल सेचन अपसव्य भएर गर्नु पर्दछ । गाईलाई हननका लागि बाहिर लैजाने सम्मको कार्य र चरु निर्वपण आदि कार्य पनि अपसव्य भएर नै गर्नू ।

**सन्नपश्वदानानां प्रधानार्थो न हीतरः ।**
**प्रधानं हवनञ्चैव शेषं प्रकृतिवद्भवेत् ॥१४॥**

मरेका पशुको अवदानको उद्देश्य नै प्रधान हो अरु होइन । हवन पनि प्रधान हो बाँकी कार्य स्वाभाविक रुपले हुनु पर्दछ ।

**द्वीपमुन्नतमाख्यातं शादा चैवेष्टा स्मृता ।**
**कीलिनं सजलं प्रोक्तं दूरखातोदको मरुः ॥१५॥**

अग्लो स्थानलाई द्वीप र ईंटलाई शादा, पानी पाइने ठाउँलाई कीलिन र टाढासम्म खन्दा जहाँ पानी भेटिन्छ त्यसलाई मरु भनिन्छ ।

**द्वारे गवाक्षस्तम्भैः कर्दमभित्त्यन्तकोणैश्च ।**
**नेष्टं वास्तुद्वारं विद्धमनाक्रान्तमार्यैश्च ॥१६॥**

गाऱ्होमा प्वाल हुने, खम्बा हालेको, गाऱ्होले बनेको र भित्र कुनु परेको, भित्तो र प्वाल भएको घर इष्ट हुँदैन तथा जहाँ सज्जनको आवतजावत हुँदैन त्यो पनि इष्ट होइन ।

**वशङ्गमाविति व्रीहिञ्छङ्ख्श्चेति यवांस्तथा ।**
**असावित्यत्र नामोक्त्वा जुहुयात् क्षिप्रहोमवत् ॥१७॥**

"वशगमौ" आदि मन्त्रले धान तथा "शङ्ख्श्च" आदि मन्त्रले जौलाई र "असौ" को स्थानमा नाम उच्चारण गरी क्षिप्रहोम झैं होम गर्नू ।

**साक्षतं सुमनोयुक्तमसदकं दधिसंयुतम् ।**
**अर्घ्यं दधिमधुभ्याञ्च मधुपर्कों विधीयते ॥१८॥**

अक्षता, फूल, जल र दही मिलाएर अर्घ्य हुन्छ । दही र महले मधुपर्क बनाइन्छ ।

**कांस्येनैवार्हणीयस्य निनयेदर्घ्यमञ्जलौ ।**
**कांस्यापिधानं कांस्यस्थं मधुपर्कं समर्पयेत् ॥१९॥**

काँसको भाँडोले नै अर्घ्य दिन योग्य मानिसको अञ्जलिमा अर्घ्य दिनू । काँसको भाँडोले नै छोपिएको र काँसकै भाँडामा राखिएको मधुपर्क नै दिनू ।

॥ इत्येकोनत्रिंशः खण्डः ॥२९॥
॥ मोहनप्रसाद सापकोटाद्वारा गरिएको उनन्तिसौं खण्डको नेपाली भावानुवाद सकियो ॥



आदितः श्लोकानां समष्टयङ्काः-४६२+१९=४८१
शुरुदेखिको श्लोकसङ्ख्या :



॥ समाप्ता चेयं कात्यायनस्मृतिः ॥
॥ मोहन प्रसाद सापकोटाद्वारा गरिएको कात्यायन स्मृतिको नेपाली भावानुवाद सकियो ॥
॥ सबैको कल्याण होस् ! ॥